श्रीः

काशिनिवासिभिर् विद्वद्भिर् ब्राह्म्मणैर् दत्ता

रतवर्षबहिर्गमन-विधर्मिविदेशिसहवाससहभोजनादि-दुरित-

# प्रायश्चित्तव्यवस्था

( नैपालीयभाषानिबद्धविस्तृतोपोद्घातेन विविधैः परिशिष्टैश् च सहिता )




सङ्ग्रहीता

**शिवराजआचार्यःकौण्डिन्न्यायनः**

आचार्यः,एम्.ए.,विद्द्यावारिधिः(पिएच्.डि.),वाचस्पतिः(डि.लिट्.)



**स्वाद्ध्यायशाला**

च.२/४१९ सरस्स्वतीमार्गः, लाजिम्पाट्,

काष्ठमण्डपनगरम्-२, नेपालः, दूरस्स्वनः ४१०३२७

२०४९






पण्डित कविराज नरनाथ आचार्य (१९६२-२०४५)

श्रीमती गङ्गामाया (पद्मा) देवी (१९७२-)

श्रीः

# उपोद्घात

## (क) तनुङ-जनपदमा चुँदि

भूमण्डलको जम्बूद्वीपमा भारतवर्ष-क्षेत्रको कुमारी-खण्डमा हिमालयका मद्ध्यभागका दक्षिणि पाखामा नेपालप्रदेश छ । नेपालको वर्तमान प्रशासनकेन्द्र काठमाण्डुदेखि तिस कोस जति पश्चिममा तनुङ-जनपद (तनहुँ जिल्ला) छ । एस जनपदमा १८३९ वैक्रमाब्दभन्दा अगि सेनहरुको प्रशासन थियो । तेस बेलाका तनुङमा ऐलेको तनुङ-जिल्ला चिताउन-जिल्ला र भारतको विहारप्रान्तको चम्पारन-जिल्लाको रामनगर-क्षेत्र पनि सम्मिलित थियो । तेस वेलादेखि नै एस क्षेत्रमा बाउन-ठकुरि-छेत्रि-न्याआर-गुरुम-मगर-घर्ति-बोटे-दरै-कुमाल-सार्कि-कामि-दमै-गाइनेहरु मिलि-जुलि बसोबास गर्दैआएका छन् ।

तनुङका सेनप्रशासकहरुमा भृङ्गिसेन (विहङ्गसेन) (१६१०-१६२८वै.), हम्बिर-सेन (अहवँवीरसेन), तुलासेन (त्रिविक्क्रमसेन), दामोदर- सेन (१७१०-१७३०वैं), दिग्विजयसेन, कामराजदत्त-सेन, त्रिविक्क्रम-सेन (१७९८-१८२६वै.), कामारिदत्त-सेन, हरकुमारदत्तसेनहरुका नाम इतिहासमा सुनिञ्चन् । गोर्खालिहरुको विजयपछि हरकुमार-दत्तसेन १८३९ वैक्क्रमाब्ददेखि पाहाडि खण्ड छोडि रामनगरको भूमिपतिक्षेत्रमा बस्न थालेकारचन् । हरकुमारदत्तसेनपछि तेजःप्रतापसेन-अमरप्रतापसेन-रणमर्दनसेन-प्रह्लाद-सेन-मोहनविक्क्रमसाहिहरुका नामपाँइञ्चन् । हरकुमारदत्तसेनका **स्वस्ति-श्रीश्वर-चरणसरोरुहस्स्मरणेत्यादि-श्रीमद्रामचन्द्रवंशोद्भव-सदासमाराधित-साम्ब-शिव-लक्ष्मीनारायण-श्रीमन्महाराजाधिराज-श्री-श्री-श्री-श्री-श्रीमद्-धरकुमारदत्त-सेनदेवानां सदा समरविजयिनाम्"** भन्नि प्रशस्तिबाट समेत अगिदेखि नै तनुङमा धार्मिक परम्परा राम्म्रो भएको देखिञ्च । त्रिविक्क्रमसेनले ब्रह्मविद्द्याभरणजपविधि र श्रीपूजातिलक भन्नि संस्कृतग्रन्थ बनाएको, त्रिविक्क्रमका आज्ञाले गङ्गाविष्णुले आचारदीपक भन्नि धर्मशास्त्रनिबन्धग्रन्थ बनाएको, शारदातिलकको पुस्तक सारेको, त्रिविक्क्रमकै आज्ञाले कुलनिधिशर्माले नित्यकर्मप्रकाशिका भन्नि आह्निकाचार-विषयक ग्रन्थ बनाएको पनि देखिञ्छ । एसबाट पनि उक्त कुरा पुष्ट हुञ्च । पृथ्वीनारायणलाइ मिताक्षराको[1] व्यवहाराद्ध्याय सुनाउन खोद्दा गोर्खामा मिताक्षराको पुस्तक नपाय्येकाले तनुङबाट सो पुस्तक प्राप्त गरिएको भन्नि इतिहासोल्लिखित[2] कुराले, आचारदीपकमा गङ्गाविष्णुले "विद्द्यावन्तो यत्र गर्जन्ति सार्थाः" भनेकाले र १८९० वैक्क्रमाब्दमा प्रयागमा बसेर "वासुदेवरसानन्द"[3] भन्नि ग्रन्थ लेख्ता पनि शिवशर्मसूरिले तनुङलाइ

---

१. मिताक्षरा= याज्ञवल्क्यस्मृतिको विज्ञानेश्वरकृत संस्कृतव्याख्या।

२. पृथ्वीनारायणसाहको जीवनी (वीरपुस्तकालय, २०२०), पृ. २९ - ३० ।

३. यो ग्रन्थ पैलेइ आदित्यराम भट्टाचार्यले मूलमात्र र १९९२ वैक्क्रमाब्दमा प्रयाग-दारागञ्जस्थित-शिवशर्मपाठशालाप्रबन्धकारिसमितिले हिन्दिभाषानुवादसहित प्रकाशित गरेको देखिञ्च।

"सदद्द्वैताभिमत-विद्वन्मण्डली-मण्डनायमान" भन्नि विशेषण दिएकाले तथा सत्य - धरसूनु रामोपाद्ध्यायले अन्त्यकर्म-पद्धति र मकरन्दपण्डितले ज्ञानदर्पण भन्नि संस्कृतग्रन्थ बनाएको देखिएकाले समेत तनुङमा सेनप्रशासनको प्रारम्भकालदेखि नै वेद-वेदाङ्ग-स्मृति-पुराणादि-शास्त्रको प्रचार पनि राम्म्रो भएको देखिञ्च । तनुङ जिल्लाको पूर्वि भागमा रहेको चुँदिक्षेत्त्र सेनहरुको प्रशासनकेन्द्र सुरपुरी- (तनुङसुर-)को समीपमा रहेको र विद्द्वान् ब्राह्मणहरुको निवास तथा सुभिक्ष स्थल भएकाले विद्द्याकेन्द्रका रूपमा एसको विशेषता रैआएको पनि देखिञ्छ । **"पाल्पाको छविलाल् पढ्‌ मनि चुँदी आई बस्याको थियाँ, यो रुद्‌दी हरिकृष्णलाइ अहिले माफीक लेख्वी दियाँ"** इत्यादि भनाइले पनि तनुङचुँदि विद्द्याकेन्द्रको रूपमा रैआएको कुरा झल्काएको छ । उच्चतर अद्ध्ययनका लागि कास्कि वा काशि जानि चलन पनि चुँदिमा रैआएको देखिञ्छ । श्रीकृष्णाचार्यका पञ्चम पुत्र गङ्गादत्तका छोरा वेदशर्माले कास्कि-अर्गुम्का गुरुकुलमा बसि पड्दा १९१२ संवत्मा सारेको सिद्धान्तकौमुदीको विभक्त्यर्थप्रकरणको लघुशब्देन्दुशेखर-टीकाका केइ पत्त्र ऐले भानुपुस्तकालय-(चुँदिबिसि-)मा सङ्गृहीत देखिञ्छन् । त्याँहाँ **"इति विभक्त्यर्थाः । भूभृत्सप्तघने शाके होलिकापूर्णिमातिथौ । लघु-शेखरनामेदङ्‌ गङ्गा-दत्तसुतोऽलिखत् । श्रीशाके १७७७ मासे ११ भृगुवासरे कास्किअर्घ्यग्रामे स्वगुरुकुले वसता वेदशर्मणा लिखितोऽयङ्‌ ग्रन्थः"** भन्नि उल्लेख पाँइञ्च ।

## (ख) पण्डित-कविराज-नरनाथ-आचार्य-कृत तल्लो-चुँदि-वर्णन

**तल्लो चुँदि छ ब्रह्म्मको पुरि असल् आचार् छ ठिक् विप्प्रमा**
**खान्या-अन्न-विषे छ धान् अति ठुलो उब्जञ्छ त्यो खेतमा ।**
**पाह्री पाँनि र दाउरा अतिनजिक् मद्ध्यम्-शिखर्को छ यो**
**बस्ती गर्न असल् अलीकति पशू-पाखा-विषे कम् भयो ॥**

**पड्छन् ब्राह्म्मण खुप् चलाख टठिला मानिस्हरू जात् सबै**
**निर्बुद्धो लँगडो लुलो र गँडहा देखिन्न मानिस् कबै ।**
**भानूभक्त भनी प्रसिद्ध कविजी जन्म्या यहीँ बेस् छ यो**
**विद्द्याकेन्द्र असल् अलीकति पशू-पाखा-विषे कम् भयो ॥**

## (ग) तनुङचुँदिका श्रीकृष्ण आचार्यको वंश

तनुङजनपदको - चुँदि-तामाकोट-गाममा वैक्क्रमाब्दका उन्नाइसौं शताब्दीमा (आनुमानिक १८११-१८८८) श्रीकृष्ण आचार्य-(जोखु पाद्ध्या-)को निवास भएको देखिञ्च । श्रीकृष्ण आचार्यका पूर्वजहरुमा श्रीकृष्णभन्दा अगिका नौ-पुरुषसम्मका नाम



पाँइञ्चन् । ति नाम क्रमशः सूर्योपाद्ध्याय, सुनन्दनोपाद्ध्याय, इन्द्रमणि उपाद्ध्याय, विष्णुहरि उपाद्ध्याय, मणिकण्ठोपाद्ध्याय, स्थानेश्श्वरोपाद्ध्याय, ऋषीश्श्वरोपाद्ध्याय, बालानन्दोपाद्ध्याय र अग्नीश्श्वरोपाद्ध्याय हुन् । आँफ्नु परिचय दिनपर्दा भानुभक्त आचार्य-(१८७१-१९२५)ले श्रीकृष्ण आचार्यको परिचयका आधारमा आँफ्नु परिचय तल लेखिएका श्लोकले प्रस्तुत गरेको पाँइञ्च-

**पाहाड्को अति बेस देश् तनहुँमा श्रीकृष्ण ब्राह्म्मण् थिया**
**खुप् उच्चा कुल आर्यवंशि हुन गै सत्कर्ममा मन् दिया ।**
**विद्द्यामा पनि जो धुरन्धर मई शिक्षा मलाई दिया**
**तिन्को नाति म भानुभक्त भनि हुम् यो जानि चिह्नीलिया ॥**

श्रीकृष्ण आचार्यले तल्लो चुँदिकै पण्डित थरका ब्राह्मण रामनाथकि[४] छोरि बियागरेको देखिञ्च । इ पण्डित थरका ब्राह्मणका सन्तान त्याँहाँ चुँदिबिसिमा र फाम्दिपट्टि गरि ऐले पनि दस-बार घर देखिञ्चन् । श्रीकृष्ण आचार्यका तिनै पण्डितकि छोरिमा जन्मेका धनञ्जय, काशिनाथ, पद्मनाभ, तुलसीराम, गङ्गादत्त, इन्द्रविलास भन्नि छ भाइ छोरा र भिर्कोटका परशुराम सिग्देललाइ दिएकि रुद्द्रप्रिया र गोर्खा-भोटिनिका यदुनन्दन अर्ज्याललाइ दिएकि रमा भन्नि छोरि थिए । विद्द्या, इष्टापूर्त, धर्मकर्म, दान-पुण्ण्य, सदाचार, वंशवृद्धि, धनधान्यसमृद्धि सबैथोकबाट श्रीकृष्ण आचार्यको ख्याति चलेको हुँदा भानुभक्तले उक्त प्रकारले श्रीकृष्ण आचार्यको ख्यातिका आधारमा आँफ्नु परिचय दिएको देखिञ्च । भानुभक्तले आँफ्ना बाउको नाम नलिइ बाजे श्रीकृष्णको नाम लिएकाले श्रीकृष्णको विशिष्ट ख्याति भएको बुजिञ्छ । श्रीकृष्णले वृद्धावस्थामा काशिवास गरि काशिमै देहत्याग गरेका थिए । श्रीकृष्ण आचार्यका जेठा छोरा खर्दार धनञ्जयका सुपुत्त्र, श्रीकृष्ण आचार्यका नाति तथा शिष्य, नेपालि भाषाका आदिकवि भानुभक्त आचार्यका नामले गर्दा ऐले तनुङ-चुँदि र श्रीकृष्ण आचार्यको वंश सम्पूर्ण नेपालिहरुमा सुविक्ख्यात छ ।

## (घ) श्रीकृष्णआचार्यका वंशका पण्डित कविराज नरनाथ आचार्य

श्रीकृष्ण आचार्यका साँइला छोरा पद्मनाभ- (शेखर-) का तनुङ-बन्दिपुरका भटराइकि छोरिमा जन्मेका गौरीदत्त र देवदत्त दुइभाइ छोरा र छ बैनि छोरि थिए । तिनमा देवदत्त (आ. १८९९-१९५३) ज्योतिषका ज्ञाता हुनुहुन्थ्यो । देवदत्तका तनुङ- नरङ्डाका अधिकारि ब्राह्मणकि छोरि पद्मा देवि-(१९०१-१९७५)मा जन्मेका विश्श्वनाथ (१९१४-१९८६), लोकनाथ (१९२७-१९६३), तारानाथ (१९३५-१९८६) र वेदनाथ (१९४०-१९९८) भन्नि चार भाइ छोरा थिए । योगमाया, यशोदा, कमला, तारा, तिलोत्तमा र खिना भन्नि छ बैनि छोरि थिए । तिनमा ताराका छोराहरुमद्ध्ये काञ्छा यदुनाथ खनाल (१९७०-) र खिनाका छोराम्दद्ध्ये काञ्छा जुननाथ पण्डित (१९६५-२०४७) नेपालि

४. शालिग्ग्राम पण्डितले गुणानन्दकि पुत्त्री भन्नि कुरा गरेकामा निजबाटै प्राप्त पुस्तावलिबाट पुस्ता विचार गर्दा यो कुरा देखिन आएको हो ।

समाजमा विशेष परिचित भए। देवदत्तका चारभाइ छोरामद्ध्ये जेठा विश्वनाथ संस्कृतसाहित्य- व्याकरण-धर्मशास्त्रमा विचक्षण, व्यावहारिक कर्मकाण्डमा निपुण, उत्तम पुराणकथावाचक र स्वतन्त्र अद्ध्यापक पनि हुनुहुन्थ्यो। माइला लोकनाथ ज्योतिषका ज्ञाता हुनुहुन्थ्यो। वाँहाँले सार्नुभएको ग्रहलाघवको पुस्तकका केइ पत्र भेटिएका छन्। वाँहाँ प्रवास(चइनपुर-[ताप्लेजुङअमिनि])-बाटै १९६३संवर्त्का माघेअम्सिमा सूर्यग्रहणमा गङ्गास्नान गर्न काशि जानुभएकामा सो कर्म गरि पञ्चक्रोशीयात्रा पनि गरेपछि माघशुक्लषष्ठीमा काशिमै विसूचिकाले वाँहाँको देह छुटेको रछ। काञ्छा वेदनाथ भार्दारिमा डिट्ठासम्म हुनुभएको थियो। लोकनाथका तनुङ- उपल्ला चुँदिका रमावल्लभ (गुणानन्द) खँदालकि पलौँतिनि वेणीमाधवकि नातिनि दुर्गादत्तकि सुपुत्री यशोदा देवी-(१९२९-१९८५)मा दुइ चिरजीवि छोरा भए। तिनमा जेठा उमानाथ (१९५७-२०१७) मेधावी, वाक्पटु, शास्त्रज्ञ, वेदभक्त, आचारनिष्ठ, दृढव्रत प्राणाचार्य हुनुहुन्थ्यो। वाँहाँ काशि-हिन्दु-विश्वविद्द्यालयको आयुर्वेद-विज्ञानाचार्य-परीक्षामा उत्तीर्ण हुनुहुन्थ्यो। वाँहाँ नेपालमा आयुर्वेदको विद्द्यालय खुल्दा १९८५ वैक्क्रमाब्दमा अद्ध्यापक नियुक्त हुनुभएको थियो। सांसद नरहरि आचार्य वाँहाँकै छोरा हुन्। काञ्छा नरनाथ (१९६२-२०४५) कुशाग्ग्रीयबुद्धि, परिश्रमि, उद्द्यमशील, न्याय्यवृत्तिपरायण, कर्मयोगि; व्यावहारिक धर्मशास्त्र, नीतिशास्त्र, ज्योतिष, कर्मकाण्ड कथा-पुराण, लेखापडि -व्यवहार इत्यादिमा विचक्षण, लेखक, कवि र थोरै व्ययले चिकित्सा गरिदिनि सरलस्वभावका लोकप्रिय कुशल चिकित्सक हुनुहुन्थ्यो। वाँहाँ वाराणसीका व्याकरणमध्यमामा र आयुर्वेद-शास्त्रिपरीक्षामा उत्तीर्ण हुनुहुन्थ्यो। वाँहाँका सत्यहरिश्चन्द्रकथा (२०१६), आदिकवि भानुभक्त आचार्यको सच्चा जीवनचरित्त्र (प्रथमसंस्करण २०१७, द्वितीयसंस्करण २०३६), लक्षाहुतिपञ्चदशी (२०३२), पद्द्यमाला (२०४०), कवितासङ्ग्रह (२०४०) इत्यादि कृतिहरु प्रकाशित छन्। संस्कृतमा फुट्कर पद्द्यहरु पनि वाँहाँले रच्नुभएकोछ। ति उक्त पद्द्यमालामा समाविष्ट छन्। प्रतिसंस्कृत -चतुरशीतिपूजापद्धति पनि वाँहाँले लेख्नुभएको छ।

पण्डित कविराज नरनाथ आचार्यका तनुङ-क्यामिन-धरम्पाँनिका पण्डित दामोदर वाग्लेकि पलौँतिनि वसन्त वाग्लेकि नातिनि वेदपाठपरायण अनिरुद्ध वाग्ले -(१९२९-१९९९)कि सुपुत्री गङ्गामाया (पद्मा) देवी- (१९७२-)मा चिरजीवि छ भाइ छोराहरु र एउडि छोरि भए। तिनमा छोराहरु क्रमशः शिवराज (१९९७-), साम्बराज (२०००-), विश्वराज (२००२-), जयराज (२००८-)[५], विजयराज (२०११-), र सोमराज (२०१४-) हुन्। छोरि हरिमाया देवी (१९९६-) हुन्। जेठा छोरा शास्त्रिप्रथमखण्डसम्म उत्तीर्ण भएका भोजराज (१९९२-२०१०) चाइँ विवाहित भएर पनि निरपत्य नै अल्पायुमै बितेका हुन्।

५. जयराज आचार्यले नेपालि द्विजातिका समेत धर्मगुरु बन्न चाहानि पश्चिमा गोराहरुको भारतवर्षीय-वैदिक-सनातन-वर्णाश्रमधर्ममर्यादाको मूलरूपको अत्यन्तै विरोधि संस्था सार्वदेशिककृष्णभावनामृतसङ्घ-(इस्क्कोन)को पक्ष लिएकाले इनको आँफुलाइ शैक्षिक उन्नतिमा सबै प्रकारले टेबा दिइ अगि बडाउनि अग्ग्रज शिवराज आचार्यसित फाटो पर्न गयो, आउनुजानु बन्द भयो, सम्पर्क नै टुट्यो। नेपालमा इस्क्कोनको गतिविधिका विषयमा तल सङ्क्षेपमा लेखिनि छ (पृ.४०)।२०४५ वैक्क्रमाब्दमा पिता नरनाथ आचार्यको देहावसान हुँदा वाँहाँले अगि नै दिइराख्नुभएको "उद्द्योगका लागि विदेश गएकालाइ म

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ)



## (ङ) तनुङ चुँदिको अर्वाचीनकालको शैक्षिक गतिविधि

वेद-वेदाङ्गादि संस्कृतभाषानिबद्ध शास्त्रहरुको विद्द्वत्ताका परम्पराका विषयमा तनुङको अगिदेखि नै विशिष्ट स्थान रैआएको कुरा "वीर योद्धा पैदा गर्नमा जस्तो गोर्खा प्रसिद्ध थियो उस्तै विद्द्वान् पैदा गर्नमा तनहुँले नाम कमाएको थियो"[६] भन्नि बाबुराम आचार्यका भनाइबाट समेत स्पष्ट हुञ्च। निकट भूतकालमा पनि आँफ्ना पितामह सत्कर्मि धुरन्धर विद्द्वान् श्रीकृष्ण आचार्यबाट संस्कृतशिक्षा पाइ संस्कृतग्रन्थ अद्ध्यात्मरामायणको अनुवादका रूपमा धर्म-संस्कृतिका, अद्ध्यात्म-ज्ञानका तथा भाषा-र-काव्व्यका दृष्टिले अपूर्व र नेपालि वाङ्मयमा सर्वाङ्गपूर्ण प्रथम काव्व्य भाषारामायण प्रस्तुत गरि तनुङ-चुँदिका श्रीकृष्ण आचार्यका वंशमा जन्मेका नेपालि भाषाका आदिकवि भानुभक्त आचार्यले उक्त परम्पराको राम्म्रो परिचय जाँहाँसुकै रएका भए पनि सबै नेपालि-भाषाभाषिहरुलाइ दीराखेकै छन्।

दुर्गाकवच-चण्डी-रुद्द्री-वेद-अमरकोषहरुको र प्रचलित कर्मकाण्डको तथा पञ्चाङ्ग-उतार्नि-सम्मको ज्योतिषको शिक्षा आँफ्नै पिता देवदत्त आचार्यबाट र संस्कृतसाहित्यको र पाणिनीय व्याकरणको विशेष शिक्षा कास्कि-अर्गुमृका पण्डित दिननाथबाट पाएका तनुङचुँदि-तामाकोट-निवासि पण्डित विश्वनाथ आचार्य (१९१४-१९८६)ले आँफ्ना समयमा स्वतन्त्र रूपमा हिउँदका समयमा र फुर्सद हुँदा अरु समयमा

तलमाथि भए पनि खबर नगर्नु, उद्द्योग पूर्ण गरि फर्केर स्वदेशमा-आएपछि नै तिनले जो गर्नपर्नि काम गर्छन्" भन्नि आज्ञा-अनुसार् आमा-र-दाजुहरुले जयराज आचार्यलाइ पिताको देहावसान भएको जानकारि नदिएकामा जयराज आचार्यले "अरुबाटै पिताको निधन भएको सूचना प्राप्त गरि मैले अमेरिकामा नै पितालाइ दसदिनको अञ्जलिदान गरि पिताको क्रिया गरेँ" भनि आमा-दाजुहरुलाइ पत्र लेखेछन्। दाजु शिवराज आचार्यले जयराजले तेस अवस्थामा पठाएको पत्र लिँदा पनि नलिइ नहेरि बसेकामा आमा-दिदिहरुले पत्र लिइ हेर्दा सो कुरा थाहापाइ कुरा गर्दा विचार हुँदा निश्चयभए-अन्सार् आमाले "भारतवर्षका निवासि ब्राह्मणले पिताको क्रिया अमेरिकामा गरेर हुँदैन, तुरुन्त घर आउनु" भनि पत्र पठाउँदा पनि जयराज आचार्य घर आएनन्। पछि जयराज घर आइ आमा-दिदिलाइ भेट्ता आमाले "दाजुकाँहाँ गै आँफु नेपाल आएको कुरा अवगत गराइ दाजुले भने बमोजिम् शास्त्रोक्त प्रायश्चित्त गरि पितालाइ दस दिनको अञ्जलि दिनि काम गर्" भन्दा अटेरि गरि इनि हिँडिरहेका छन्। इनि अमेरिकनहरुका सहयोगले ७ वर्ष अमेरिका बसि आएर ऐले संयुक्तराष्ट्रसङ्घमा नेपालका स्थायि प्रतिनिधि नियुक्त हुन पुगेका छन्। ऐले पनि आमा-दाजु-दिदिहरुबाट इनलाइ स्वधर्माचारमा ल्याउन विविध प्रकारले सम्जाउनि- बुजाउनि र दबाब समेत दिनि काम भैराखेको छ।

६. भानुभक्तस्मारक ग्रन्थ-(१९९७)मा शिवशर्मा पण्डित भन्नि लेख, पृ. ४९।

सोमराज (२०१४-) हुन् । छोरि हरिमाया देवी (१९९६-) हुन् । जेठा छोरा शास्त्रिप्रथमखण्डसम्म उत्तीर्ण भएका भोजराज (१९९२-२०१०) चाइँ विवाहित भएर पनि निरपत्य नै अल्पायुमै बितेका हुन् ।

## (ङ) तनुङ चुँदिको अर्वाचीनकालको शैक्षिक गतिविधि

वेद-वेदाङ्गादि संस्कृतभाषानिबद्ध शास्त्रहरुको विद्वत्ताका परम्पराका विषयमा तनुङको अगिदेखि नै विशिष्ट स्थान रैआएको कुरा "वीर योद्धा पैदा गर्नमा जस्तो गोर्खा प्रसिद्ध थियो उस्तै विद्वान् पैदा गर्नमा तनहुँले नाम कमाएको थियो"[६] भन्नि बाबुराम आचार्यका भनाइबाट समेत स्पष्ट हुञ्च । निकट भूतकालमा पनि आँफ्ना पितामह सत्कर्मि धुरन्धर विद्वान् श्रीकृष्ण आचार्यबाट संस्कृतशिक्षा पाइ संस्कृतग्रन्थ अद्ध्यात्मरामायणको अनुवादका रूपमा धर्म-संस्कृतिका, अद्ध्यात्म-ज्ञानका तथा भाषा-र-काव्यका दृष्टिले अपूर्व र नेपालि वाङ्मयमा सर्वाङ्गपूर्ण प्रथम काव्य भाषारामायण प्रस्तुत गरि तनुङ-चुँदिका श्रीकृष्ण आचार्यका वंशमा जन्मेका नेपालि भाषाका आदिकवि भानुभक्त आचार्यले उक्त परम्पराको राम्रो परिचय जाँहाँसुकै रएका भए पनि सबै नेपालि-भाषाभाषिहरुलाइ दीरास्वेकै छन् ।

दुर्गाकवच-चण्डी-रुद्द्री-वेद-अमरकोषहरुको र प्रचलित कर्मकाण्डको तथा पञ्चाङ्ग-उतार्नि-सम्मको ज्योतिषको शिक्षा आँफ्नै पिता देवदत्त आचार्यबाट र संस्कृतसाहित्यको र पाणिनीय व्याकरणको विशेष शिक्षा कास्कि-अर्गुमृका पण्डित दिननाथबाट पाएका तनुङचुँदि-तामाकोट-निवासि पण्डित विश्वनाथ आचार्य (१९१४-१९८६)ले आँफ्ना समयमा स्वतन्त्र रूपमा हिउँदका समयमा र फुर्सद हुँदा अरु समयमा

तलमाथि भए पनि स्वबर नगर्नु, उद्द्योग पूर्ण गरि फर्केर स्वदेशमा-आएपछि नै तिनले जो गर्नपर्नि काम गर्छन्" भन्नि आज्ञा-अनुसार् आमा-र-दाजुहरुले जयराज आचार्यलाइ पिताको देहावसान भएको जानकारि नदिएकामा जयराज आचार्यले "अरुबाटै पिताको निधन भएको सूचना प्राप्त गरि मैले अमेरिकामा नै पितालाइ दसदिनको अञ्जलिदान गरि पिताको क्रिया गरेँ" भनि आमा-दाजुहरुलाइ पत्र लेस्वेछन् । दाजु शिवराज आचार्यले जयराजले तेस अवस्थामा पठाएको पत्र लिँदा पनि नलिइ नहेरि बसेकामा आमा-दिदिहरुले पत्र लिइ हेर्दा सो कुरा थाहापाइ कुरा गर्दा विचार हुँदा निश्चयभए-अन्सार् आमाले "भारतवर्षका निवासि ब्राह्मणले पिताको क्रिया अमेरिकामा गरेर हुँदैन, तुरुन्त घर आउनु" भनि पत्र पठाउँदा पनि जयराज आचार्य घर आएनन् । पछि जयराज घर आइ आमा-दिदिलाइ भेट्ता आमाले "दाजुकाँहाँ गै आँफु नेपाल आएको कुरा अवगत गराइ दाजुले भने बमोजिम् शास्त्रोक्त प्रायश्चित्त गरि पितालाइ दस दिनको अञ्जलि दिनि काम गर्" भन्दा अटेरि गरि इनि हिँडिरहेका छन् । इनि अमेरिकनहरुका सहयोगले ७ वर्ष अमेरिका बसि आएर ऐले संयुक्तराष्ट्रसङ्घमा नेपालका स्थायि प्रतिनिधि नियुक्त हुन पुगेका छन् । ऐले पनि आमा-दाजु-दिदिहरुबाट इनलाइ स्वधर्माचारमा ल्याउन विविध प्रकारले सम्झाउनि- बुजाउनि र दबाब समेत दिनि काम भैरास्वेको छ ।

६. भानुभक्तस्मारक ग्रन्थ-(१९९७)मा शिवशर्मा पण्डित भन्नि लेख, पृ. ४९ ।



पनि पढ्न आउनिहरुलाइ दुर्गाकवच, चण्डी, रुद्द्री, वेद, कर्मकाण्ड, कथा-पुराण, महूर्तमार्तण्ड, अमरकोष, लघुकौमुदी, मद्ध्यकौमुदी इत्यादि सर्वथा निश्शुल्क रूपमा पडाउनि गर्नुभएको कुरा आप्तवचनबाट स्पष्ट रूपमा ज्ञात भएको कुरा हो । ज्ञानहरि पण्डित-(१९७२)ले विश्वनाथसित लघुकौमुदी पढ्न प्रारम्भ गरेको कुरा चुँदिरम्घा पत्त्रिकामा (व.३, अ.३, पृ.१०)उल्लिखित देखिञ्छ । विश्वनाथ आचार्यको व्यक्तित्व-र-कृतित्वका विषयमा आदिकवि भानुभक्त आचार्यको सच्चा जीवनचरित्त्रमा (२०१७, पृ.१२३-१२७; २०३६, पृ.१८८-१९१), नेपालि- (त्रैमासिक) का चवालिसौँ पूर्णाङ्कमा, भानुदर्शन पत्त्रिकाका दोस्त्रा पूर्णाङ्कमा, र भोलि- (२०२८, पृ. १२) मा तथा कतिपय-नैपाल-संस्कृतग्रन्थकार-परिचय- (२०४८) मा पनि लेखिएको पाँइञ्च ।

नेपालमा पूर्वपश्चिम-पाहाड-मदेसमा अरु पण्डितहरुले पनि ठामठाममा स्वतन्त्र रूपमा तेस्तो अद्ध्यापन अगिदेखिनै गर्दैआएको देखिञ्च । तेस्तै रूपमा गामघरमा घरायसि रूपमा पठनपाठन चल्थ्यो। वेदवेदाङ्गादि धार्मिक आद्ध्यात्मिक संस्कृतग्रन्थका साथै चाणक्क्यनीतिदर्पण, हितोपदेश, शुक्रनीति, कामन्दकीय नीतिसार इत्यादि ग्रन्थ पनि अगिअगि नेपालमा पढ्नि-पडाउनि गरिन्थ्यो भन्नि कुरा इतिहासको अद्ध्ययनबाट देखिञ्च ।

१९२५ वैक्रमाब्दतिरदेखि नै प्रारम्भ भै १९३४ वैक्रमाब्ददेखि काठमाण्डुमा संस्कृतपाठशाला व्यवस्थित रूपमा निरन्तर चल्न थाले-पछि र गामठामका कतिपय पउँचवाला व्यक्तिहरुले पाठशाला निकासा गरेर लैजान-थाले-पछि ठामठाममा पाठशाले पण्डितहरुबाट पनि पठनपाठनको काम हुनथालेको देखिञ्च । तथापि पाठशाला ज्यादै पातला भएकाले गामगाममा स्वतन्त्र पठनपाठन पूर्ववत् नै चल्दैगरेको पनि बुजिञ्च ।

तल्लो चुँदिमा २००५ वैक्रमाब्दसम्म सर्खारि पाठशाला रहेको थिएन । तथापि ऐले घरैपिच्छेजस्तो विश्वविद्यालयस्नातक पाँइनि एस गाममा अगिअगि पनि धेरै नै पण्डितहरु भएको र समयसमयका ति पण्डितहरुबाट स्वतन्त्र रूपमा पठन-पाठन चल्दै गरेको देखिञ्छ । गामका पण्डितहरु पाठशाले पण्डित मै लास्वापास्वा लाग्नि स्थिति आएपछि केइ समय त्यो पठनपाठन अवरुद्ध पनि हुनगएको बुजिञ्च ।

तनुङ-चुँदि-तामाकोटका संस्कृत-मद्ध्यम-परीक्षोत्तीर्ण पण्डितहरुमद्ध्ये प. कृष्णप्रसाद आचार्य-(१९४७-१९८६)बाट र प. चन्द्रकान्त पौडेल- (१९४९-१९८८)बाट बन्दिपुर-पाठशालामा; प.कालिदास आचार्य-(१९५६-२००४)बाट पुर्कोट-पाठशालामा; पण्डित नरनाथ आचार्य-(१९६२-२०४५) बाट पनि केइ समय (१९८५-१९८७) गोर्खा-सिराञ्चोक-लाङ्दि-पाठशालामा; प. शिवशङ्कर आचार्य-(१९६४-)बाट बन्दिपुर-पाठशालामा र प. रुद्द्रशङ्कर पौडेल- (१९६४-२०३१) बाट कुनै समय तनुङसुर-पाठशालामा र कुनै समय ज्यामुरुक -पाठशालामा पडाउनि काम भएको थियो ।

एस्तैमा १९९६।१२।२८ मितिदेखि १९९९।६।१७ मितिसम्म लम्जुङ-जिता-पाठशालामा बाहाल रै मुचुल्काबाट गएलस्वालिमा परेका[७] चुँदि-तामाकोटका तीर्थराज

७. पश्चिम-पहाडको निजामतिकिताप१९९६,पृ.६६; १९९९, पृ.५८ (रा. अभिले.मा सङ्गृहीत) ।

पनि पढ्न आउनिहरुलाइ दुर्गाकवच, चण्डी, रुद्द्री, वेद, कर्मकाण्ड, कथा-पुराण महूर्तमार्तण्ड, अमरकोष, लघुकौमुदी, मद्ध्यकौमुदी इत्त्यादि सर्वथा निश्शुल्क रूपम पडाउनि गर्नुभएको कुरा आप्तवचनबाट स्पष्ट रूपमा ज्ञात भएको कुरा हो। ज्ञानहरि पण्डित-(१९७२)ले विश्श्वनाथसित लघुकौमुदी पढ्न प्रारम्भ गरेको कुरा चुँदिरम्घ पत्त्रिकामा (व.३, अ.३, पृ.१०)उल्लिखित देखिञ्छ। विश्श्वनाथ आचार्यको व्यक्तित्त्व-र-कृतित्वका विषयमा आदिकवि भानुभक्त आचार्यको सच्चा जीवनचरित्त्रमा (२०१७, पृ.१२३-१२७; २०३६, पृ.१८८-१९१), नेपालि- (त्रैमासिक) का चव्वालिसौँ पूर्णाङ्कमा, भानुदर्शन पत्त्रिकाका दोस्ध्रा पूर्णाङ्कमा, र भोलि- (२०२८, पृ. १२) मा तथा कतिपय-नैपाल-संस्कृतग्रन्थकार-परिचय- (२०४८) मा पनि लेखिएको पाँइञ्च।

नेपालमा पूर्वपश्चिम-पाहाड-मदेसमा अरु पण्डितहरुले पनि ठामठाममा स्वतन्त्र रूपमा तेस्तो अद्द्ध्यापन अगिदेखिनै गर्दैआएको देखिञ्च। तेस्तै रूपमा गामघरमा घरायसि रूपमा पठनपाठन चल्थ्यो। वेदवेदाङ्गादि धार्मिक आद्द्ध्यात्मिक संस्कृतग्रन्थका साथै चाणक्क्यनीतिदर्पण, हितोपदेश, शुक्क्रनीति, कामन्दकीय नीतिसार इत्त्यादि ग्रन्थ पनि अगिअगि नेपालमा पढ्नि-पडाउनि गरिन्थ्यो भन्नि कुरा इतिहासको अद्द्ध्ययनबाट देखिञ्च।

१९२५ वैक्क्रमाब्दतिरदेखि नै प्रारम्भ भै १९३४ वैक्क्रमाब्ददेखि काठमाण्डुमा संस्कृतपाठशाला व्यवस्थित रूपमा निरन्तर चल्न थाले-पछि र गामठामका कतिपय पउँचव्वाला व्यक्तिहरुले पाठशाला निकासा गरेर लैजान-थाले-पछि ठामठाममा पाठशाले पण्डितहरुबाट पनि पठनपाठनको काम हुनथालेको देखिञ्च। तथापि पाठशाला ज्यादै पातला भएकाले गामगाममा स्वतन्त्र पठनपाठन पूर्ववत् नै चल्दैगरेको पनि बुजिञ्च।

तल्लो चुँदिमा २००५ वैक्क्रमाब्दसम्म सर्खारि पाठशाला रहेको थिएन। तथापि ऐले घरैपिच्छेजस्तो विश्श्वविद्द्यालयस्नातक पाँइनि एस गाममा अगिअगि पनि धेरै नै पण्डितहरु भएको र समयसमयका ति पण्डितहरुबाट स्वतन्त्र रूपमा पठन-पाठन चल्दै गरेको देखिञ्छ। गामका पण्डितहरु पाठशाले पण्डित भै लाखापाखा लाग्नि स्थिति आएपछि केइ समय त्यो पठनपाठन अवरुद्द्ध पनि हुनगएको बुजिञ्च।

तनुङ-चुँदि-तामाकोटका संस्कृत-मद्द्ध्यम-परीक्षोत्तीर्ण पण्डितहरुमद्द्ध्ये प. कृष्णप्रसाद आचार्य-(१९४७-१९८६)बाट र प. चन्द्रकान्त पौडेल- (१९४९-१९८८)बाट बन्दिपुर-पाठशालामा; प.कालिदास आचार्य-(१९५८-२००४)बाट पुर्कोट-पाठशालामा; पण्डित नरनाथ आचार्य-(१९६२-२०४५) बाट पनि केइ समय (१९८५-१९८७) गोर्खा-सिराञ्चोक-लाङ्दि-पाठशालामा; प. शिवशङ्कर आचार्य-(१९६४-)बाट बन्दिपुर-पाठशालामा र प. रुद्द्रशङ्कर पौडेल- (१९६४-२०३१) बाट कुनै समय तनुङसुर-पाठशालामा र कुनै समय ज्याम्रुक -पाठशालामा पडाउनि काम भएको थियो।

एस्तैमा १९९६।१२।२८ मितिदेखि १९९९।६।१७ मितिसम्म लम्जुङ-जिता-पाठशालामा बाहाल रै मुचुल्काबाट गएलखालिमा परेका[७] चुँदि-तामाकोटका तीर्थराज

७. पश्चिम-पहाडको निजामतिकितापा१९९६,पृ.६६; १९९९, पृ ५८ (रा. अभिले.मा सङ्गृहीत)।



आचार्य- (१९७४-)ले १९९८ वैक्क्रमाब्दतिर चुँदि-तामाकोट-तेर्सेपाँनिको गामको पँदेरामा शिवलिङ्ग स्थापित गर्नि, फुलबारि लाउनि र पर्खालले घेर्नि इत्यादि काम गरेका रछन्। इनले २०१८ संवत्मा र २०३२ संवत्मा चुँदिबिसि-श्रीकृष्णाचार्य-वाटिकामा गायत्त्री-लक्ष-होमको आयोजना पनि गरेका थिए। इनले अगि १९९९ संवत्मा चुँदि-तामाकोट्मा एउडा घरायसि वेदपाठशाला चलाउनि तथा तेसै पाठशालाका प्रारम्भकालका दामोदर पौडेल, गिरिराज आचार्य, पूर्णचन्द्र पौडेल, रामचन्द्र पौडेल, रमानाथ आचार्य र पछि थपिँदै गएका शोभाकर आचार्य, लक्ष्मीनाथ आचार्य, ढुण्ढिराज (विष्णुप्रसाद) आचार्य, धर्मदत्त आचार्य, प्रयागदत्त आचार्य, पशुपतिनाथ आचार्य, हरिनाथ आचार्य इत्त्यादि विद्द्यार्थिलाइ यथोचित रूपमा शौच-स्नान-सन्ध्योपासनका नियमहरुको पालन गराउनि, राम्ध्रा अच्छेर बनाइ लेख्न प्रोत्साहित गर्नि, देउदेउताका स्तोत्त्र, रुद्द्री, मा.वा.शु.य. वेद (-मन्त्रसंहिता), घोकाउनि पनि गरेका रचन्। तेसै कामलाइ लिएर तीर्थराज आचार्यले र उनका भाइ-भतिजा-ज्वाँइ-चेलाहरुले धेरै बडाइ-चडाइ गरेको देखिञ्च। किन्तु तीर्थराज आचार्यले कुनै योग्य गुरुबाट राम्ध्ररि स्वशाखावेदको ग्रहणाद्द्ध्ययन गरेको भनि उल्लेख गर्न उनले आँफैले नै नसकेको देखिनाले[८] उनले जेसुकै दाबा गरे पनि उनको त्यो वेदको पठन-पाठन प्रातिशाक्ख्यशिक्षाका दृष्टिले कति "अस्खलितरूपमा" थियो होला भन्नि कुरा दोषज्ञहरुले यथार्थ कुराको नजिक पुग्नि गरेर कल्पना गर्न सक्चन्। "आदित्यनाथ वैदिकको वेदध्वनि कुन सम्प्रदायको हो उनै जानुन्" भनि पण्डित वाल्मीकि पौडेलले उल्लेख गरेको (मर्यादा, अ. १९, पृ. ५) देख्ता तीर्थराज आचार्यले आदित्त्यनाथ लामिछानेबाट अब्भ्यास गरेको वेदध्वनिका विषयमा पनि अनेक कुरा उठ्न थाल्चन्। भारतवर्षका अरु प्रायः सबै ब्राह्मणहरुले झैँइ नै तनुङचुँदिका ब्राह्मणवटुहरुलेपनि गायत्त्रीको शास्त्रीयरूपमा पूर्णतया शुद्द्ध उच्चारण गर्न नसके पनि कतिपय मन्दशिक्षित घरका ब्राह्मणवटुबाएक अरु ब्राह्मणवटुले सामान्य-चल्तिअन्सार् शुद्द्धै मानिनि किसिमले गायत्त्रीको उच्चारण गर्दैआएका हुँदाहुन्। तल्लो चुँदिका तीर्थराज -आचार्य- भन्दा जेठा बुडापाका समेत सबै ब्राह्मणले तीर्थराज आचार्यसित गायत्त्रीको उच्चारण सिकेको पनि त देखिँदैन। तेस्तै बुडापाकाका परम्परा-बाट आएअन्सार् गायत्त्रीको उच्चारण गर्नि परम्परा ऐले पनि छँदैछ। तसर्थ तीर्थराज आचार्यले "तल्लो चुँदिमा गायत्त्रीको शुद्द्ध उच्चारणको परम्परा मैले बसालेको हुम्" भन्नि देखाउन गरेको प्रचार[९] तत्थ्यको सर्वथा विपरीत र चुँदिको विद्द्वत्परम्पराको घोर अपमान गर्नि कुरा समेत हुनाले अत्त्यन्तै अनादरणीय देखिञ्छ। आँफ्ना समयका आँफ्ना गामका केइ ब्राह्मणवटुलाइ देउदेउताका स्तोत्त्र र रुद्द्रीवेदहरु घोकाएका आधारमा "(चुँदि-) रम्घामा शिक्षाको सूत्त्रपात तीर्थराज आचार्यबाट भएको हो" भनि फैलाउन खोजिएको भ्रमलाइ स्वयम् तीर्थराज आचार्यले नै समर्थन गर्नु[१०] पनि सारै नै नस्वाँउदो कुरो देखिञ्च। "स्वाद्द्ध्यायप्रवचनाब्भ्यान् न प्प्रमदितव्व्यम्" भन्नि वेदकै आज्ञा भएको (तैत्तिरीयोपनिषद् १।११।१) र "अद्द्ध्यापनम् ब्रह्मयज्ञः" (मनु.३।७०) इत्त्यादि

८. चुँदि रम्घा पत्त्रिका, व.२,अ.२ (२०३९),पृ.३।
९. तिँहिँ, पृ. १।
१०. तिँहिँ, पृ. १-२।

आचार्य- (१९७४-)ले १९९८ वैक्रमाब्दतिर चुँदि-तामाकोट-तेर्सेपाँनिको गामको पँदेरामा शिवलिङ्ग स्थापित गर्नि, फुलबारि लाउनि र पर्खालले घेर्नि इत्यादि काम गरेका रछन् । इनले २०१८ संवत्मा र २०३२ संवत्मा चुँदिबिसि-श्रीकृष्णाचार्य-वाटिकामा गायत्री-लक्ष-होमको आयोजना पनि गरेका थिए । इनले अगि १९९९ संवत्मा चुँदि-तामाकोट्मा एउडा घरायसि वेदपाठशाला चलाउनि तथा तेसै पाठशालाका प्रारम्भकालका दामोदर पौडेल, गिरिराज आचार्य, पूर्णचन्द्र पौडेल, रामचन्द्र पौडेल, रमानाथ आचार्य र पछि थपिँदै गएका शोभाकर आचार्य, लक्ष्मीनाथ आचार्य, ढुण्ढिराज (विष्णुप्रसाद) आचार्य, धर्मदत्त आचार्य, प्रयागदत्त आचार्य, पशुपतिनाथ आचार्य, हरिनाथ आचार्य इत्यादि विद्द्यार्थिलाइ यथोचित रूपमा शौच-स्नान-सन्ध्योपासनका नियमहरुको पालन गराउनि, राम्म्रा अच्छेर बनाइ लेख्न प्रोत्साहित गर्नि, देउदेउताका स्तोत्त्र, रुद्द्री, मा.वा.शु.य. वेद (-मन्त्रसंहिता), घोकाउनि पनि गरेका रचन् । तेसै कामलाइ लिएर तीर्थराज आचार्यले र उनका भाइ-भतिजा-ज्वाँइ-चेलाहरुले धेरै बडाइ-चडाइ गरेको देखिञ्च । किन्तु तीर्थराज आचार्यले कुनै योग्य गुरुबाट राम्म्ररि स्वशाखावेदको ग्रहणाद्ध्ययन् गरेको भनि उल्लेख गर्न उनले आँफैले नै नसकेको देखिनाले[८] उनले जेसुकै दाबा गरे पनि उनको त्यो वेदको पठन-पाठन प्रातिशाक्ख्यशिक्षाका दृष्टिले कति "अस्स्वलितरूपमा" थियो होला भन्नि कुरा दोषज्ञहरुले यथार्थ कुराको नजिक पुग्नि गरेर कल्पना गर्न सक्चन् । "आदित्यनाथ वैदिकको वेदध्वनि कुन सम्प्रदायको हो उनै जानुन्" भनि पण्डित्त वाल्मीकि पौडेलले उल्लेख गरेको (मर्यादा, अ. १९, पृ. ५) देख्ता तीर्थराज आचार्यले आदित्त्यनाथ लामिछानेबाट अब्भ्यास गरेको वेदध्वनिका विषयमा पनि अनेक कुरा उठ्न थाल्चन् । भारतवर्षका अरु प्रायः सबै ब्राह्मणहरुले झैँइ नै तनुङचुँदिका ब्राह्मणवटुहरुलेपनि गायत्त्रीको शास्त्रीयरूपमा पूर्णतया शुद्ध उच्चारण गर्न नसके पनि कतिपय मन्दशिक्षित घरका ब्राह्मणवटुबाएक अरु ब्राह्मणवटुले सामान्न्य-चल्तिअन्सार् शुद्धै मानिनि किसिमले गायत्त्रीको उच्चारण गर्दैआएका हुँदाहुन् । तल्लो चुँदिका तीर्थराज-आचार्य-भन्दा जेठा बुडापाका समेत सबै ब्राह्मणले तीर्थराज आचार्यसित गायत्त्रीको उच्चारण सिकेको पनि त देखिँदैन। तेस्तै बुडापाकाका परम्परा-बाट आएअन्सार् गायत्त्रीको उच्चारण गर्नि परम्परा ऐले पनि छँदैछ । तसर्थ तीर्थराज आचार्यले "तल्लो चुँदिमा गायत्त्रीको शुद्ध उच्चारणको परम्परा मैले बसालेको हुम्" भन्नि देखाउन गरेको प्रचार[९] तत्थ्यको सर्वथा विपरीत र चुँदिको विद्द्वत्परम्पराको घोर अपमान गर्नि कुरा समेत हुनाले अत्त्यन्तै अनादरणीय देखिञ्छ । आँफ्ना समयका आँफ्ना गामका केइ ब्राह्मणवटुलाइ देउदेउताका स्तोत्त्र र रुद्द्रीवेदहरु घोकाएका आधारमा "(चुँदि-) रम्घामा शिक्षाको सूत्त्रपात तीर्थराज आचार्यबाट भएको हो" भनि फैलाउन खोजिएको भ्रमलाइ स्वयम् तीर्थराज आचार्यले नै समर्थन गर्नु[१०] पनि सारै नै नस्वाँउदो कुरो देखिञ्च । "स्वाद्ध्यायप्रवचनाब्भ्यान् न प्प्रमदितव्व्यम्" भन्नि वेदकै आज्ञा भएको (तैत्तिरीयोपनिषद् १।११।१) र "अद्ध्यापनम् ब्रह्मयज्ञः" (मनु.३।७०) इत्यादि

---

८. चुँदि रम्घा पत्त्रिका, व.२,अ.२ (२०३९),पृ.३ ।
९. तिँहिँ, पृ. १ ।
१०. तिँहिँ, पृ. १-२ ।



स्मृतिवचनहरु पनि देखिएका हुनाले अद्ध्यापन पनि ब्रह्मयज्ञभित्त्रै परेको हुँदा ब्रह्मयज्ञका रूपमा गरिनि वेद-वेदाङ्गको अद्ध्यापन समर्थ ब्राह्मणका लागि सनातनधर्मकै रूपमा रैआएकाले; राणाका पालामा पनि नेपालमा देउदेउताका स्तोत्त्र, दुर्गाकवच, चण्डी, रुद्द्री, वेद, श्राद्धपद्धति, अग्निस्थापना, ग्रहशान्ति, नामकरणादि-पद्धतिहरु, व्यावहारिक ज्योतिष, अमरकोष, काव्व्य, कौमुदी, चाणक्क्यनीतिदर्पण इत्त्यादि पड्नपडाउनमा कुनै प्रतिबन्ध नभएको देखिएकाले; गामगामका प्रमुख प्रतिष्ठित उदार व्यक्तिहरुका घरमा राखिएका वा स्वतन्त्र पण्डितहरुका पासमा गै तेसतेस गामका लड्काहरुले आँफ्ना-आँफ्ना रुचि-र-आवश्यकताका विषय पड्नि कुरा पूर्वपश्चिम-पहाड-मदेस सबैतिर नेपालमा अगिदेखि नै चल्दै आएको बुजिनाले र चुँदि पाल्पादेखिका मान्छे पनि पड्न आउनि बस्नि विद्द्याकेन्द्र रैआएको देखिएकाले तथा तीर्थराज आचार्यभन्दा अगिल्ला पुस्ताका वा जेठा र स्वतन्त्र अद्ध्यापन गर्नि समेत धेरै पण्डितहरु चुँदिमा भएका देखिएकाले समेत तीर्थराज आचार्यले गरेगराएको त्यो केइकालको रुद्द्री-वेदको पठनपाठन कुनै "अपूर्व शैक्षिक क्रान्ति"[११] पनि देखिँदैन । तीर्थराज आचार्यभन्दा अगिल्लो पुस्ताका वा जेठा वा तीर्थराज आचार्यसित नपडेका, रुद्द्री -वेद, काव्व्य-कौमुदी पडेका चल्तिका कर्मकाण्ड गर्नगराउन र कथापुराण भन्न सक्नि र कतिपय स्वतन्त्र अद्ध्यापन समेत गर्नि तथा कतिपय त संस्कृतमद्ध्यमपरीक्षामा नै उत्तीर्ण भएका समेत विश्श्वनाथ ( १९१४-१९८६) -दिननाथ (१९३७-२००२)- लक्ष्मीधर (१९३९-१९७५)- कृष्णप्रसाद (१९४७-१९८६)-नरनाथ (१९६२-२०४५)- गोविन्द -हरिहर-शिवशङ्कर-(१९६४)-त्रैलोक्क्यनाथ (१९६७-)- कालिदास (१९५९-२००४)- भोजराज- देवीदास - ज्ञानिशङ्कर - कृष्णराज - रामभक्त आचार्यहरु, चन्द्रकान्त (१९४९-१९८८) - रुद्द्रशङ्कर (१९६४-२०३०)- सोमनाथ (१९७६-)- सूर्यनाथ - टीकाराम - हरिनाथ - टीकाराज पौडेलहरु, ज्ञानहरि (१९७२-)- रामचन्द्र पण्डितहरु समेत धेरै पण्डितहरु तल्लो चुँदिमा देखिञ्छन् । उमानाथ आचार्य (१९५७-२०१७) त विद्द्याधर्मका क्षेत्त्रमा आँफ्ना कालका सबै दाजुभाइ-बन्धुवर्गलाइ बाटो देखाउनि, डोर्‍याउनि, पडाउनि र धेरैका प्रेरणास्रोतका रूपमा रहेका तथा सोमनाथ पौडेल आदि कतिपय बन्धुलाइ आँफैले पालि पडाइ उतार्नि व्यक्ति हुनुहुन्थ्यो । व़ाँहाँको एस्तो चरित्त्रका विषयमा मानुदर्शनको प्रथम पूर्णाङ्कमा प्रकाशित तीर्थराज आचार्यकै लेख पनि पठनीय छ । तसर्थ "(चुँदि-) रम्घामा शिक्षाको सूत्त्रपात तीर्थराज आचार्यबाट भएको हो" भन्नि कुरा वस्तुस्थितिसित कत्ति पनि मेल नखानि कुरा देखिञ्च ।

फेरि १९९६।१२।२८ मितिदेखि १९९९।६।१७ मितिसम्म तनुङ -चुँदितामाकोट-देखि चारपाँचकोस परको लम्जुङ-जिता-पाठशालामा बाहाल रहेका २००२ संवत्का मङ्सिरमा नेपालराजदर्बारमा कविराज पदमा नियुक्त भएका र, तेसै समयमा "धेरैजसो उमानाथ आचार्यका सन्निधिमा (काठमाण्डु-नरदेवी— आयुर्वेदविद्द्यालयमा) रहि

---

११. द्रष्टव्व्य - चुँदिरम्घा, व. २, अ.२ (२०३९), पृ. १, नेपाल अधिराज्यमा तनहुँ (२०४५), पृ. ३९६ ।

स्मृतिवचनहरु पनि देखिएका हुनाले अद्ध्यापन पनि ब्रह्म्मयज्ञभित्त्रै परेको हुँदा ब्रह्म्मयज्ञका रूपमा गरिनि वेद-वेदाङ्गको अद्ध्यापन समर्थ ब्राह्म्मणका लागि सनातनधर्मकै रूपमा रैआएकाले; राणाका पालामा पनि नेपालमा देउदेउताका स्तोत्त्र, दुर्गाकवच, चण्डी, रुद्द्री, वेद, श्राद्धपद्धति, अग्निस्थापना, ग्रहशान्ति, नामकरणादि-पद्धतिहरु, व्यावहारिक ज्योतिष, अमरकोष, काव्व्य, कौमुदी, चाणक्क्यनीतिदर्पण इत्त्यादि पड्नपडाउनमा कुनै प्रतिबन्ध नभएको देखिएकाले; गामगामका प्रमुख प्रतिष्ठित उदार व्यक्तिहरुका घरमा राखिएका वा स्वतन्त्र पण्डितहरुका पासमा गै तेसतेस गामका लड्काहरुले आँफ्ना-आँफ्ना रुचि-र-आवश्यकताका विषय पड्नि कुरा पूर्वपश्चिम-पहाड-मदेस सबैतिर नेपालमा अगिदेखि नै चल्दै आएको बुजिनाले र चुँदि पाल्पादेखिका माञ्छे पनि पड्न आउनि बस्नि विद्द्याकेन्द्र रैआएको देखिएकाले तथा तीर्थराज आचार्यभन्दा अगिल्ला पुस्ताका वा जेठा र स्वतन्त्र अद्ध्यापन गर्नि समेत धेरै पण्डितहरु चुँदिमा भएका देखिएकाले समेत तीर्थराज आचार्यले गरेगराएको त्यो केइकालको रुद्द्री-वेदको पठनपाठन कुनै "अपूर्व शैक्षिक क्रान्ति"[11] पनि देखिँदैन। तीर्थराज आचार्यभन्दा अगिल्लो पुस्ताका वा जेठा वा तीर्थराज आचार्यसित नपडेका, रुद्द्री -वेद, काव्व्य-कौमुदी पडेका चल्तिका कर्मकाण्ड गर्नगराउन र कथापुराण भन्न सक्नि र कतिपय स्वतन्त्र अद्ध्यापन समेत गर्नि तथा कतिपय त संस्कृतमद्ध्यमपरीक्षामा नै उत्तीर्ण भएका समेत विश्श्वनाथ ( १९१४-१९८६) -दिननाथ (१९३७-२००२)- लक्ष्मीधर (१९३९-१९७५)- कृष्णप्रसाद (१९४७-१९८६)-नरनाथ (१९६२-२०४५)- गोविन्द -हरिहर-शिवशङ्कर-(१९६४)-त्रैलोक्क्यनाथ (१९६७-)- कालिदास (१९५८-२००४)- भोजराज- देवीदास - ज्ञानिशङ्कर - कृष्णराज - रामभक्त आचार्यहरु, चन्द्रकान्त (१९४९-१९८८) - रुद्द्रशङ्कर (१९६४-२०३१)- सोमनाथ (१९७६-)- सूर्यनाथ - टीकाराम - हरिनाथ - टीकाराज पौडेलहरु, ज्ञानहरि (१९७२-)- रामचन्द्र पण्डितहरु समेत धेरै पण्डितहरु तल्लो चुँदिमा देखिञ्छन्। उमानाथ आचार्य (१९५७-२०१७) त विद्द्याधर्मका क्षेत्त्रमा आँफ्ना कालका सबै दाजुभाइ-बन्धुवर्गलाइ बाटो देखाउनि, डोर्‍याउनि, पडाउनि र धेरैका प्रेरणास्रोतका रूपमा रहेका तथा सोमनाथ पौडेल आदि कतिपय बन्धुलाइ आँफैले पालि पडाइ उतार्नि व्यक्ति हुनुहुन्थ्यो। वाँहाँको एस्तो चरित्त्रका विषयमा भानुदर्शनको प्रथम पूर्णाङ्कमा प्रकाशित तीर्थराज आचार्यकै लेख पनि पठनीय छ। तसर्थ "(चुँदि-) रम्घामा शिक्षाको सूत्त्रपात तीर्थराज आचार्यबाट भएको हो" भन्नि कुरा वस्तुस्थितिसित कत्ति पनि मेल नखानि कुरा देखिञ्च।

फेरि १९९६।१२।२८ मितिदेखि १९९९।६।१७ मितिसम्म तनुङ -चुँदितामाकोट-देखि चारपाँचकोस परको लम्जुङ-जिता-पाठशालमा बाहाल रहेका २००२ संवत्का मङ्सिरमा नेपालराजदर्बारमा कविराज पदमा नियुक्त भएका र, तेसै समयमा "धेरैजसो उमानाथ आचार्यका सन्निधिमा (काठमाण्डु-नरदेवी— आयुर्वेदविद्द्यालयमा) रहि

11. द्रष्टव्व्य - चुँदिरम्घा, व. २, अ.२ (२०३९), पृ. १, नेपाल अधिराज्यमा तनहुँ (२०४५), पृ. ३९६।



आयुर्वेदशास्त्र नियमानुसार ६ वर्षसम्म पडेर वैद्द्यरत्न- (=आयुर्वेदाचार्य-) को परीक्षामा उत्तीर्ण भएका"[12] तीर्थराज आचार्यबाट तनुङ-चुँदि-तामाकोटमा तेसै कालमा (१९९९-२००४ भित्त्र) " अटूट रूपमा पाँच वर्षसम्म शैक्षिक वातावरण पूर्ण रूपले तयार गरि सेवा गरि" "वेदवेदाङ्गविद्द्यालय ठड्याइ तेसलाइ २००४ सालमा सर्खारि पाठशाला बनाइ तेसमा ज्यामृुक-पाठशालामा सेवारत श्रीरुद्द्रशङ्कर पौडेललाइ सरुआ गरि आँफु राजदर्बारको कविराजपदमा नियुक्त हुनि काम"[13] कसरि हुनसक्यो होला अचम्मैलाग्दो कुरा छ। तीर्थराज आचार्य २००२ संवत्का कार्तिक मैनामा नरदेवी - आयुर्वेदीय - औषधालयमा कविराजपदमा नियुक्त भै तेसका एकमैनापछि राजदर्बारमा सरुआ भएको कुरा नेपाल अधिराज्ज्यमा तनहुँ भन्नि पुस्तकमा ३९५ सङ्ख्याको पृष्ठमा उल्लिखित देखिञ्च। तीर्थराज आचार्य २००२ संवत्देखि २०३२ संवत्सम्म राजप्रासादमा कविराजपदमा रहेको कुरा दाङको हिमज्योति-(संस्कृत-मासिक-पत्त्रिका)- बाट (व.१,अ.११,२०४१ ; पृ.४-५) पनि देखिञ्च। गोर्खापत्त्रमा (२०४४।११।१८, पृ. ४) "उहाँ (तीर्थराज आचार्य) .... २००३ सालदेखि ३१ वर्षसम्म कविराजको पदमा रही राजदरवारमा काम गर्नुभयो" भन्नि कुरा प्रकाशित देखिञ्च। चुँदिरम्घा-पत्त्रिकामा प्रकाशित तीर्थराज आचार्यका अन्तर्वार्ताबाट (व.२, अ. २, पृ.६) तीर्थराज आचार्य २००४ संवत्मा "राजदरवारको कविराजपदमा नियुक्त" भएको देखिञ्च। इ तिनथरि कुरा कसका भनाइका आधारमा प्रकाशित भएका हुन्? उक्त लेखहरुका लेखकहरु तेसै आँफै एकएक थोक लेख्न पुगेका हुन् कि "ढाँट्याऽ कुराले र फाट्याऽ लुगाले काम दिँदैन" भने जस्तो भाको हो? तत्थ्य क्या हो? सत्य कुरा अल्मल्याउन खोजिएको छनक पाँइञ्च।

चुँदिरम्घा-पत्त्रिकाबाट (वर्ष .२, अङ्क.२, पृ .१,२,६,) तीर्थराजआचार्यको वेदवेदाङ्ग विद्द्यालय चलाउनि इच्छा देखिञ्च। गोर्खापत्त्रबाट (२०४२।८।१, पृ. ३, लहर १) तीर्थराज आचार्य " तनहुँ र काठमाडौँमा वेदवेदाङ्गविद्यालयका संस्थापक एवं सञ्चालक" भएको बुजिञ्च। गोर्खापत्त्रमा नै (२०४४।११।१८।४) "तीर्थराज आचार्यले १९९९ सालमा रम्घामा वेदविद्याश्रम खोली स्वयं संस्थापक संञ्चालक तथा अध्यापक भई चलाउनुभयो" भन्नि उल्लेख पाँइञ्च। नेपाल अधिराज्यमा तनहुँ भन्नि पुस्तकमा (पृ.३९६) तीर्थराज आचार्यले "राणाको विरुद्ध शैक्षिक क्रान्ति गरि चुँदिरम्घामा गुरुकुलको आदर्शमा वेदवेदाङ्ग पढाउन विद्यालयको संस्थापक(न?) तथा अध्यापनकार्य गर्नुभयो" भन्नि उल्लेख पाँइञ्छ। यो कुरा तीर्थराज आचार्यकै भनाइका रूपमा चुँदिरम्घापत्त्रिकामा (व.२, अ.२, पृ.१) पनि उल्लिखित देखिञ्छ। साथै गोर्खापत्त्रमा २००३।११।१३ मितिमा "त्याँहाँ (रम्घामा) एक भाषापाठशाला रहेमा हाम्रो भाषाका आदिकवि भानुभक्तका हृदयले हामिलाइ कृतज्ञतापूर्ण दृष्टिले देख्तो हो कि ?" भन्नि बेहोराको तीर्थराज आचार्यको पत्त्र प्रकाशित भएको कुरा पनि गोर्खापत्त्रबाट देखिञ्च (२०४४।११।१८, पृ.४)।

१२. द्रष्टव्व्य - भानुदर्शन ( २०३१, आषाढ २९), पृ. ७५।
१३. चुँदिरम्घा, व. २, अ.२, पृ. ६।

नेपाल-निजामति-कितापखानाको पश्चिम पाहाडका २००२, २००३, २००४, २००५ संवत्का किताबहरुबाट पनि २००५ संवत्सम्म तल्लो चुँदिमा कुनै सर्स्वारि पाठशाला भएको देखिँदैन । एस पङ्क्तिका लेखक २००४ संवत्का मुङ्सिरमा बन्दिपुरबाट आँफ्नु पुर्खेउलिथलो तल्लो चुँदिमा आँउँदा त्याँहाँ कुनै तेस्तो पाठशाला थिएन र कसैले गामका वटुहरुलाइ एक ठाममा बोटलि स्वतन्त्र रूपमा पडाउनि गरेको पनि थिएन । पश्चिम पाहाडको २५ सङ्ख्या को (२००६ संवत्को) कितापको १८० सङ्ख्याको पानामा "तन्हौ चोक पाठशालाका सूर्यनाथ पाध्या २००६ साल वैशाख १० गते दोरदोरपाठशालामा सरुवा" भन्नि उल्लेख पाँइञ्च । पण्डित-रुद्द्रशङ्करसम्बन्धि उल्लेख गोलमोलिएको देखिञ्च । तेस बेला पूर्वपश्चिम पाहाडमदेसका ठामठाममा एकैचोटि ७३ ओडा भाषापाठशालाहरु नएँ खोलिएकाले पुरानिया पण्डितहरुलाइ घरपाइमा सरुआ हुनि सुविधा दिय्येको र पण्डित रुद्द्रशङ्कर पौडेल बुडा पुराना हुनाले आँफ्नै घरगामको पाठशालामा र उनिभन्दा काञ्छा सूर्यनाथ पौडेल आँफ्नुघरबाट चोकभन्दा नजिकको तर अल्लि परको दोरदोरपाठशालामा सरुआ गरिएका हुन् र दुऔले एकै दिन नएँ पाठशालामा बाहालि गरेका हुन् भन्नि कुरा सुनिएको हो । रुद्द्रशङ्कर पौडेल नवस्थापित चुँदिरम्गा- पाठशालामा सरुआ भै खालि हुन आएका ज्याम्रुकपाठशालामा २००६ साल वैशाख १० गते नै आँफुले बाहालि गरेको कुरा उपल्ला चुँदिका पण्डित हरिवंश भटराइका मुखबाट भर्खरै सुन्नमा आएकोछ । "२००५ साल कार्तिक २९ गतेको सनद-अन्सार् स्थापित भएको आँफ्नु घरको नजिकको दमुङपाठशालामा सरुआ भै २००६ साल वैशाख १० गते नै मैले पनि बाहालि गरेको हुम्" भनि १९७७ संवत्मा जन्मेका म्याग्देका पण्डित रामदत्त भटराइबाट पनि भर्खरै जानकारि दिय्येको छ । कागतपत्र केलाएमा र यथार्थ कुरा बुज्न बोल्न सुन्न चाहेमा उपर्युक्त कुरा सजिलै बुज्न बोल्न सकिनि र सुन्न पाँइनि कुरा देखिञ्च ।

उपर्युक्त कुराहरु थापाएपछि तीर्थराज आचार्यले तल्लो चुँदिमा वेदवेदाङ्ग-विद्द्यालय वा वेदविद्द्याश्रम वा भाषापाठशाला के स्थापित गरेका वा के चलाउन खोजेका हुन् ; उनले तेसमा अटूट सेवा कति समय गरेका हुन्, उनले चलाएको घरायसि पाठशालाको र २००६ संवत्मा खुलेको सर्स्वारि भाषापाठशालाको केइ सम्बन्ध थियो वा थिएन, तीर्थराज आचार्यले "अदम्य र अतिभयावह राणाशासनमा अपूर्व शैक्षिक क्रान्ति गरि" स्थापित गरेका विद्द्यालयलाइ राणाले स्वीकृत गरेका होलान् कि क़ैलेमैले लुप्त भैसकेको तीर्थराज आचार्यको केइकालको घरायसि कथित वेदवेदाङ्गविद्द्यालयसित निरपेक्षै रूपमा राणाले चुँदिरम्गामा नएँ भाषापाठशाला दिएका होलान् इत्त्यादि कुरा विवेकशील मनुष्ष्यले कदापि बुज्न सकोइनन् ? अहो मित्थ्यायशोलोलुपता !!! २००६ साल वैशाख १० गते रुद्द्रशङ्कर पौडेल सरुआ भै आएका त वेदवेदाङ्गविद्द्यालयमा वा वेदविद्द्याश्रममा अवश्श्य हैन, नवस्थापित सर्स्वारि भाषापाठशालामा हो । एस भषापाठशालाको धेरै अगि नै लुप्त भैसकेको छोटो समयको तीर्थराजआचार्यको उक्त वेदवेदाङ्गविद्यालयसित कुनै सम्बन्ध थिएन । तेसैले तीर्थराज आचार्यको पठनपाठन चलेको माइला मुक्खिया- (नरबहादुर रानाभाट्-) को थारो भएको तामाकोटको भूमि र थारो पनि यो नएँ भाषापाठशालालाइ प्राप्त भएन । एस भाषा-पाठशालाको भवन गाम्लेहरुले रम्गाका डाँडामा ऐले भानुको प्रतिमा भएको स्थानदेखि उत्तरपूर्वपट्टि नजिकै



बनाएका थिए । पाठशालाको तह बडेपछि त्यो अल्लि दक्षिणतिर सारिएको हो र आजभोलि तेसै भवनमा रम्गागामको प्राथमिक विद्द्यालय चल्दै छ । २००६ संवत्मा रुद्द्रशङ्कर पौडेल सरुआ भै आएका भाषापाठशालामा त तत्काल चल्तिमा रहेको सर्स्वारि पाट्ठ्यक्रम-(१९९२)अन्सार् पैला र दोस्स्रा कक्षामा लेखन, पठन, गणित, भूगोल, इतिहास, स्वास्थ्यविद्द्या, प्रकृतिपरिचय, हातको काम र खेल सिकाउन पर्नि देखिञ्च भने तेस्स्रा कक्षामा उक्त विषयहरुका अतिरिक्त संस्कृत वा अङ्रेजि वा खेस्ता वा अन्य कुनै स्वीकृत विषय समेत पडाउन पर्नि देखिञ्च । तथापि एक जाना मात्त्र शिक्षक रहेका पाठशालामा उक्त पाठ्यक्रम जतिसक्यो उति मात्त्र चलाउन पनि छुट भएको पाँइञ्च । एस्तो पाट्ठयक्रम भएको र पाँनि चल्नि जातसम्मका मतवालि लड्का पनि पड्न पाँउनि त्यो सर्स्वारि भाषापाठशाला वेदवेदाङ्गविद्द्यालयको स्थानापन्न मान्न सकिञ्च? प्राशासनिक शिथिलताले गर्दा भाषापाठशालामा पनि पण्डितहरु उक्त पाट्ठ्यक्रममा बद्ध नभै दुर्गाकवच, चण्डी, रुद्द्री, अमरकोष, कौमुदी इत्यादि पनि लड्काहरुका वा तिनका अभिभावकहरुका इच्छानुसार् पडाइदिनि गर्थे ; रुद्द्रशङ्कर पौडेलले पनि तेसै गरेको देखिन्थ्यो । यो आर्कै कुरो हो । तसर्थ २००६ संवत्मा स्थापितभएको चुँदिरम्गाको सर्स्वारि भाषापाठशाला सर्वथा नएँ पाठशाला हो । तेसैले चुँदिरम्गा गामको प्राथमिक विद्द्यालय स्थापित भएको साल १९९७ हो भनि वर्तमान चिह्न पाटिमा लेखिएको कुरा र चुँदिबिसिखहरेको विद्द्यालय स्थापित भएको साल १९९९ हो भनि लेखिएको कुरा सर्वथा भ्रमात्मक हो । चुँदिरम्गामा सर्स्वारि भाषापाठशाला स्थापित भएको साल २००६ भएकाले तेस पाठशालाका जरियाबाट खडा भएका वा तेसपाठशालासित नाता जोडिएका उक्त विद्द्यालयहरुको स्थापनावर्ष २००६ संवत् हो भन्न सम्म मिल्ला; १९९७ वा १९९९ संवत् भन्न आधार छैन ।

उपर्युक्त सबै कुराहरुको विचार गर्दा तीर्थराज आचार्यले र उनका भाइभतिजा-ज्वाइँ-चेलाहरुले फैलाएका "(चुँदि-)रम्घामा शिक्षाको सूत्त्रपात तीर्थराज आचार्यबाट भएको हो" "तीर्थराज आचार्यले अदम्य तथा अतिभयावह राणाशासनमा पनि अपूर्व शैक्षिक क्रान्ति गरि वेदवेदाङ्गविद्द्यालय चलाएका हुन्" "आँफुले खोलेको विद्द्यालय सञ्चालन गर्दागर्दै तेसै ठाममा पूर्ण सर्स्वारि पाठशाला माँग गरि .... २००४ सालमा त्यो प्राप्त गरेर ज्याम्रुकपाठशालामा सेवारत रुद्द्रशङ्कर पौडेललाइ तेस पाठशालामासरुआ गरि तीर्थराज आचार्य राजदर्बारको कविराजपदमा नियुक्त भएका हुन्" "ऐले चुँदिरम्गा गाममा भएको प्राथमिक विद्द्यालय र चुँदिबिसि-खहरेको विद्द्यालय पनि तीर्थराज आचार्यले स्थापित गरेका विद्द्यालय हुन्" "तिनको स्थापना १९९९ सालमा भएको हो" "तिनको स्थापनादिवस अक्षयतृतीया हो" इत्त्यादि कुरा र तीर्थराजआचार्यले आँफ्नै मुखले 'चुँदिरम्घाबिसिको ऐलेको संस्कृतमाध्यमिक विद्यालय मैले स्थापित गरेको विद्यालय हो' भन्दै हिँडेको कुरा पनि वस्तुस्थितिसित नमिल्नि देखिञ्चन् । तसर्थ उक्त प्रकारका कुरालाइ कसैले पनि मान्न्यता दिन उचित हुँदैन । साँचो-र-भ्फुटो कुराको विवेक नगर्नि कुरालाइ मान्न्यता दिँदा शिक्षाक्षेत्त्रको त आत्मा नै मोर्च ।

२०१५ संवत्को राजा महेन्द्रको पश्चिमाञ्चल भ्रमणका अवसरमा प्रारम्भिक पाठशालाका रूपमा रहेको रम्गाको उक्त भाषापाठशालामा त्यो वेलाको वर्गीकरण-

अन्सार्का माद्ध्यमिकशिक्षकका तिन दरबन्दि थप गरि तेस पाठशालालाइ तेस वेलाको वर्गीकरण-अन्सार्को संस्कृतमाद्ध्यमिकपाठशालामा परिणत गर्नि व्यवस्था भएको देख्विञ्च । तेसमा ज्ञानहरि पण्डित, तीर्थराज आचार्य, सूर्यनाथ आचार्य, पशुपतिनाथ आचार्य इत्यादि व्यक्तिबाट विशेष प्रयास भएको कुरा सुनिएको हो । उक्त व्यवस्था भएपछि २०१६।८।१ मितिमा प्राथमिकतहबाट माद्ध्यमिक तहमा पदोन्नति पाइ बन्दिपुरपाठशालाका शिवशङ्कर आचार्य र ज्ञानहरि पण्डित संस्कृतमाध्यमिकशिक्षक भएर आएका देख्विञ्छन् भने प्रारम्भिकतहबाट द्विगुणित पदोन्नति पाइ २०१६।८।१६ मितिमा रुद्रशङ्कर पौडेल पनि संस्कृतमाध्यमिकशिक्षक भएका देख्विञ्चन् । ज्येष्ठताक्रमले गर्दा शिवशङ्कर आचार्य प्रधानाद्ध्यापक भएचन् । तीर्थराज आचार्यले चाँइ घरका नजिकका चुँदि रम्गा-संस्कृतमाद्ध्यमिकविद्द्यालयमा सर्न चाहानि दोरदोर पाठशालाका पण्डित सूर्यनाथ पौडेललाइ सो सुविधाबाट वञ्चित गराइ पडाउनमाअत्त्यन्त अधृष्ट भएपनि आँफ्ना भाइ गिरिराज आचार्यलाइ तेस संस्कृतमाध्यमिकविद्यालयका प्रारम्भिकशिक्षकपदमा अस्थायिमा घुसाइ पछि स्थायि गराउनि व्यवस्था मिलाएको देख्विञ्च । गिरिराज आचार्य २०१६।९।२३ मा अस्थायि नियुक्त भै २०१७।११।३ मा स्थायि भएको कुरा निजामतिकितापस्वानाका कितापबाट देख्विञ्च । तेसताका सामान्न्यतया पुरानियाले आँफ्ना घरपाइमा सर्न प्राथमिकता पाँउनि र नएँले अरुले छोडेका ठाममा जानपर्नि परम्परा थियो । एस परम्पराका गिरिराज आचार्य अपवाद भएका देख्विएका हुन् । राणाकालदेख्वि चलिआएको त्यो राम्म्रो नियमलाइ कथित प्रजातान्त्रिक सर्स्वारिले भङ्गगरेको थियो । तेस प्रकारले काम हुँदा तेस संस्कृतमाध्यमिकविद्द्यालयमा तेसै गाममा विशेषशिक्षणसेवा दिएका शास्त्रिसम्म पडेका गिरिधारि भटराइलाइ लालायित हुँदाहुँदै पनि कुनैतहमा पनि स्थान मिल्न नसकेको र मद्ध्यमामा मात्त्र उत्त्तीर्ण भएका तेस विद्द्यालयका व्यक्तिहरुको तेस विद्द्यालयलाइ प्रधानपाठशाला-(हाइस्कुल-) का रूपमा विकसित गर्नमा व्यक्तिगत विशेष स्वार्थ केइ नभएकाले पनि तेस विद्द्यालयको तेस प्रकारको विकासको मार्ग अवरुद्धजस्तै भएको देख्विन्थ्यो । इच्छाधीन रूपमा अङ्रेजिसमेत पड्न सकिनि गरेर र काठमाण्डु-रानिपोख्वरि-संस्कृत-प्रधानपाठशालाको प्रथमपरीक्षा दिनि अनि रानिपोख्वरि-संस्कृतछात्त्रावास-(तिनधारा-पाकशाला-)मा प्रवेशको मार्ग सुगम पार्न प्रयास गर्नि इत्त्यादि काम गरेर तेस विद्द्यालयको चल्तिफिर्ति बडाउन इ पङ्क्तिका लेख्वकले समेत केइ चेष्टा गरेको हो त पनि तेस विद्द्यालयको विशेष प्रगति हुन सकेन । ग्रामीण जनताका सहयोगले पक्कि भवन र ख्वेलकुँदमैदानसम्म बने ।

एस्तैमा तेस विद्द्यालयमा पुरानो-वर्गीकरण-अन्सार् माद्ध्यमिकतहको अर्थात् प्रथमपरीक्षा- (अष्टमकक्षा-) सम्मको संस्कृतको पडाइ हुँदै आएकामा २०३० संवत्मा तनुङ्मा नएँ शिक्षायोजना लागुगरिँदा तेस विद्द्यालयमा आठकक्षाबड एक कक्षा घटाइ सप्तमकक्षासम्मको मात्र पडाइ हुनि गरेर त्यो विद्द्यालय नएँ-वर्गीकरण-अन्सार्को साधारण(अङ्रेजि-)"निम्न"माद्ध्यमिकविद्द्यालयमा परिणत गरियो । संस्कृतको विशेष पठनपाठन अवरुद्ध गरियो । तेस विद्द्यालयलाइ चुँदिबिसि-ख्वहरेमा सार्नि, तेसका लागि भूमि प्राप्त गर्नि र भवन बनाउनि काममा अर्थव्यवस्था मिलाउनमा र जनसहयोग जुटाउनमा मुक्तिनाथ आचार्य-(१९८३-)को विशेष अग्ग्रसरता रहेको सुनिएको थियो । तेस विद्द्यालयलाइ नएँ शिक्षायोजनाको वर्गीकरणअन्सार्को संस्कृत-माद्ध्यमिक-



विद्द्यालयका रूपमा विकसित गर्नि विषयमा तेस क्षेत्रका संस्कृत-शिक्षाप्रेमिहरुबाट विभिन्न रूपमा कुरा र साधारण चेष्टा भएकाभएपनि २०४१ संवत्सम्म दरो पाइलो केइ सर्न सकेको थिएन ।

## शैक्षिक गतिविधिमा भानुपुस्तकालयसम्बन्धि क्रियाकलाप

२००७ संवत्मा नेपालमा भएको शासनाधिकारिको परिवर्तनपछि समाजमा केइ ख्वुलापन आएकाले तेस वेलामा उत्साहि व्यक्तिहरुले २००८ संवत्का भानुजयन्तीका अवसरमा स्पष्ट उद्देश्श्य लिएर चुँदिरम्गामा भानुपुस्तकालय ख्वोलेका रचन् । उद्देश्श्यपत्त्र मुद्द्रित पनि भएकोरच । तेसवेला यो लेख्वक १० वर्षको मात्त्र थियो । एसलाइ अरु कुरा थाभएन । टीकारामपौडेल-रामचन्द्रपण्डितहरुले गाममा घरघरमा पुस्तक मागि पुस्तक बटुल्दै हिँडेको झल्को सम्म एसलाइ छ । पछि रुद्द्रशङ्कर पौडेल र शिवशङ्करआचार्य पुस्तकालयलाइ चन्दा उठाउन मानुङ-म्याग्देतिर पनि गएका थिए भनि चलेको चर्चाको रन्को पनि एसको कानमा गुञ्जिदै छ । ज्ञानहरि पण्डितबाट पुस्तकालय-स्थापनाकालमै पुस्तक किन्न रू. १००/- चन्दा दिय्येको कुरा चर्चामा आएको पाँइञ्च । ख्वले-पाथि उठाय्येको कुरा पनि पछिसम्म चर्चामा थियो । तथापि गामघरका जनताका उदासीनताले र कतिपय सम्बद्ध व्यक्तिहरुको भावनाको कालुष्ष्यले वा अक्षमताले गर्दा होला भानुपुस्तकालयको स्थापनाकालको सञ्चालकसमितिको, तेसका क्रियाकलापको र पुस्तकादिको प्रामाणिक आलेख्व अलब्भ्य हुन गएको देख्विञ्छ । यो लेख्वक २०१२ संवत्का भदौमा पड्न काठमाण्डु पुग्दा ठँहिटि-टोलमा एक घरमा दुइ तलामाथि भानुपुस्तकालय-सहायक-समितिको चिह्नपाटि लागेको देख्वेको सम्जना एस लेख्वकलाइ छ । अरु क्रियाकलापका विषयमा केइ जानकारि छैन । पछि एस लेख्वकमा रानिपोख्वरि-संस्कृत-छात्त्रावासमा विधान-परिषद्को अद्ध्यक्षता गर्नि, संस्कृत-महाविद्द्यालय-छात्त्रसमितिको सभापतित्त्व गर्नि, संस्कृत-छात्त्रसङ्घको संसद्को अधिवेशनको आयोजकसमितिको अद्ध्यक्षता गर्नि समेतका प्रजातन्त्रवादि विद्द्यार्थिको नेतृत्त्व गर्नि कामबाट सामाजिक क्रियाकलाप सञ्चालनगर्नि काममा केइ क्षमता विकसित भएको र देशका परिस्थितिले उक्त प्रकारका क्रियाकलाप मन्दपरेको समेत हुँदा २०२० संवत्मा एस लेख्वकले काठमाण्डुमा भानुपुस्तकालय-सहायकसमितिलाइ जगाएर केइ शैक्षिक सामाजिक काम गर्नि विचार गऱ्यो । तदनुसार भानुपुस्तकालय-सहायकसमितिको ख्वोजिगर्दा सोमनाथ पौडेलका कालधाराका घरमा एउडा दराजमा उक्त समितिका केइ सामग्ग्री भेट्टिए । तर सभा-विवरणपुस्तिका-(मिनिट्बुक्-)हरु फेलापरेनन् । पुरानो वा तात्कालिक कार्यसमितिको पनि केइ विवरण प्राप्त भएन । तसर्थ तेसवेला तल्लो चुँदिका काठमाण्डुमा उपस्थित केइ महानुभावहरुलाइ सोमनाथ पौडेलका कालधाराका घरमा नै भेला गराइ भानु-पुस्तकालय-सहायक-समितिको नएँ कार्यसमिति बनाय्यो । एस लेख्वकलाइ सचिवको काम दिय्यो । एस समितिले भानुपुस्तकालयलाइ सर्स्वारि सहायता प्राप्त गराउन प्रयास गर्दा स्वीकृतिसम्बन्धि प्रश्न आयो । सो प्रश्नको समाधान गर्न पोख्वरामा शिक्षानिरीक्षक रहेका नारायणदत्त शास्त्रिको पनि साहाय्य लिय्यो । तेस पछि तेस समयमा रानिपोख्वरि-संस्कृत-छात्त्रावासमा बस्नि र अन्यत्र बस्नि समेत विद्द्यार्थिहरु विश्श्वनाथ आचार्य,

साम्बराज आचार्य, विश्वराज आचार्य, केशवराज आचार्य, विष्णुचन्द्र आचार्य, बद्रिनाथ ढकाल, दुर्गाभक्त ढकाल, विश्वनाथ ढकाल, केशवराज पौडेल इत्यादि जाँगरिला सहयोगिहरुको सहयोगको परिचालन गरि बिदाका वेलामा चुँदिरम्गामा समेत क्रियाशील भै भानुपुस्तकालयचुँदिरम्गाका हराएर अवशिष्ट पुस्तकहरुको सूची बनाउनि, पुस्तकालय व्यवस्थित गर्नि, मुक्तिनाथ आचार्यका जिम्मामा रहेका पैसा प्राप्त गरि दराज, मेच, टेबल इत्यादि काठमाण्डुमा किनि चुँदिरम्गा पुऱ्याइ त्याँहाँ पुस्तकालयका उपकरणहरुको व्यवस्था मिलाउनि; मूल सञ्चालकसमितिको पुनर्घटन गराउनि, पुस्तकालयाद्ध्यक्षलाइ पुस्तकहरु व्यवस्थित रूपमा राख्न र लिन दिन गर्न सहयोग गर्नि, काठमाण्डुमा शिक्षामन्त्रालय, भारतीयराजदूतावास इत्यादिबाट प्रज्ञाप्रतिष्ठानका प्रकाशन समेतका महत्त्वपूर्ण धेरै पुस्तकहरु प्राप्त गर्नि; लोकसेवाआयोगका परीक्षा दिन चाहानिहरुलाइ आवश्यक र उपयोगि हुनि पुस्तकहरु किन्नि, तिनलाइ चुँदिरम्गा पुऱ्याउनि र व्यवस्थित गरि राख्नि समेत काम गरिएको थियो । उक्त सहयोगिहरुबाट चार-पान दिनको बाटो हिँडेर काठमाण्डुबाट चुँदिजाँदा पनि प्रत्येकले दुइ-तिन दुइ-तिन पुस्तक बोकेरै लैजानि काम समेत भएको थियो । एसरि भानुपुस्तकालय-चुँदिरम्गामा पुस्तकालयसम्बन्धि अन्य सुविधाका साथै पुस्तकसङ्ख्या पनि धेरै नै बडाय्येको थियो । तथापि पुस्तकालयका उपयोगका सम्बन्धमा स्थानीय जनतामा रुचि तेति जाग्न नसकेकाले यो क्रम धेरै समयसम्म चल्न सकेन । यो पुस्तकालय केवल विद्द्यालयमा मात्र सीमित रह्यो । पुस्तकालयले नवीन विद्द्यालय-भवन बनाउँदा १००।- रुप्याँ सहयोग-गरेकाले पुस्तकालय विद्द्यालयको कार्यालयकोठामा नै रहनि व्यवस्था मिलाय्येको र तदनुसारै काम भैरहेको भएपनि पुस्तकालयाद्ध्यक्षका कमजोरिले फेरि पुस्तकहरु हराउन पनि थाले ।

एस्तैमा उक्त रूपमा पुनः सक्रिय भएको भानुपुस्तकालय सहायक समिति-(काठमाण्डु-)ले काठमाण्डुका विशिष्ट नेपालिभाषासाहित्यप्रेमि व्यक्तिहरुलाइ निम्त्याइ कवि लेखनाथ पौड्यालका ठमेलका घरमा बैठक गरि सूर्यविक्रम ग्यँमालिबाट सम्पादन गरिनि भानुभक्तीय भाषारामायणका शुद्धपाठको प्रकाशन गरि तेसका आधारमा चन्दाउठाइ भानुपुस्तकालयलाइ अरु विकसित गराउनि विचार उठाय्येको थियो । पछि देवीप्रसाद रिमालका धोबिचउरका घरमा एक उच्चतहको साहित्यिकमेला गराइ चुँदि-रम्गामा भानुस्मृतिभवन बनाउनि योजना पनि बनाय्येको थियो । तेसका लागि सूर्यविक्रम ग्यँमालिले सम्पादन गर्नि भानुभक्तीय भाषारामायणको शुद्ध पाठको प्रकाशन गरि तेइ पुस्तक उपहारका रूपमा उपस्थापित गर्दै चन्दा माग्दै गरेर अर्थसङ्कलन गर्नि विचार उठाय्येको थियो तर यो योजना ग्यँमालिजिले आँफ्नु सम्पादनकार्य पुरा गर्न नसकेकाले र अरु विभिन्न कारणले कार्यान्वित हुन सकेन ।

एसै रीतले भानुपुस्तकालयसहायकसमिति-(काठमाण्डु-)को क्रियाकलाप चल्दै रहेकामा एस समितिको पुनर्निर्वाचन हुँदा पनि एसै लेखकले सचिवत्व गर्न परेको थियो । भानुभक्तीय भाषारामायणको शुद्धपाठको प्रकाशनको मेसो मिलाउन नसकिए पनि भानुका लघु कृतिहरुको शुद्धपाठको सङ्लन-सम्पादन-र-प्रकाशनका लागि प्रयत्न गरियो । तेसका लागि अर्थराशि जुटाउन एस लेखकले भानुपुस्तकालय-सहायक-



समितिको सचिवका रूपमा कतिपय दाताहरुकाँहाँ प्रत्येक मैना घुमि धेरै मैनासम्म सानुसानु राशिको मासिक चन्दा सङ्कलित गर्नि कार्य पनि गर्न परेको थियो । साथै जुननाथ पण्डितबाट भानुका लघु कृतिहरुको सम्पादनकार्य सम्पन्न गराउन पनि वाँहाँलाइ अनेक प्रकारले सहयोग पुऱ्याउन र वाँहाँका घरमा धाउनमा पनि धेरै समय लाउन परेको थियो । प्रेसबाट निकाल्दा प्रेसमा धाइ प्रुफ पढ्नमा पनि एसै लेखकले समय दिन परेको थियो । बल्लतल्ल २०२३ संवत्का भानुजयन्तीका अवसरमा भानुका लघु कृतिहरुको प्रकाशन गर्न सकियो । नपुग प्रकाशन-व्यय प्रेसका तर्फबाट छुट दिनि व्यवस्था गरिदिएर केइ सहयोग मदनशर्माबाट भएको थियो । तेस प्रकाशनका विक्क्रयबाट आउनि अर्थराशिबाट प्रकाशनमाला चलाउनि विचार राखिएको थियो ।

एस्तैमा ज्ञानहरि पण्डितले त्यागपत्र (राजिनामा) दिइ रिक्त हुन आएका भानु-संस्कृतमाद्ध्यमिकविद्द्यालय-(चुँदिरम्गा-)का शिक्षकपदमा सरुआ हुन चाहानि, पदोन्नति पाइ सरुआ हुन चाहानि, पदोन्नति चाहानि र नवीन रूपमा नियुक्त हुन चाहानि व्यक्तिहरुको भित्रभित्र प्रतिस्पर्धा चलेच । एस पदको पूर्ति गर्दा विद्द्यालयको समुन्नतिलाइ सहयोग पुग्नि गरि काम होस् भनि भानुपुस्तकालय-सहायक-समितिले समुचित भूमिका खेल्न पर्च भन्नि एस लेखकका उपर्युक्त सहयोगिहरुको समेत प्रबल धारणा थियो । तेस कुराको चेष्टा पनि हुँदै थियो । तर अकस्मात् परिणाम उक्त धारणाको प्रतिकूल निस्किँदा उक्त सहयोगिहरु एस लेखकसित रुष्ट भएर कडा प्रतिक्रिया जनाउन थाले, तथा भानुपुस्तकालयसहायकसमितिका क्रियाकलापमा उदासीन रहन थाले । एस लेखकले उक्त धारणाको प्रतिकूल काम केइ गऱ्याथेन । तथापि आँफुभन्दा बुडापाका उक्त काम बिगार्निवाला भनि आशङ्कित सदस्स्यहरुप्रति तीव्र प्रतिक्रिया व्यक्त गर्न नसकेकामा सहयोगिहरुको आक्क्रोश एस लेखकमाथि खनिएको थियो । एस्तैमा चुनाब गराएर पाका व्यक्ति विजयराज आचार्यलाइ सचिवमा चुनि समितिलाइ क्रियाशील राख्न प्रयास गरियो । तर समिति अपेक्षित रूपमा सक्रिय हुन सकेन ।

२०२६ संवत्मा भानुपुस्तकालय-सहायक-समितिलाइ भानुसेवासमितिमा परिणत गरि बडि व्यापक उद्देश्यले काम गर्नि भनि तेसो गरियो । तर सामाजिक शैक्षिक क्षेत्रका स्वतन्त्र व्यक्तिभन्दा राजनीतिक व्यक्तिहरुको र तेस्ता व्यक्तिका ओरिपोरि घुम्निहरुको एस समितिमा बाहुल्ल्य हुनथाल्यो । तेसबाट समितिलाइ शिक्षामन्त्रालयबाट केइ वार्षिक अर्थसहयोग मिल्न थालेको र काठमाण्डुमा भानुजयन्तीका दिन प्राभातिक-यात्त्रा गर्नि कार्यक्रमको प्रारम्भ भएको तथा गोपालपाँडेका सक्रियताले तनुङचुँदि-बिसिमा बनेको भानुस्मृतिभवनको उद्घाटन गराउनि, भानुपुस्तकालय तिँहिँ सार्नि र भानुसङ्ग्रहालयको व्यवस्था पनि तिँहिँ गर्नि एवम् भानुदर्शन-पत्त्रिकाका केइ अङ्क प्रकाशित गर्नि समेत केइ काम भएका भएपनि सामाजिक-साहित्यिकसंस्थाका रूपमा संस्थाको आत्मा चाँहिँ ओइलाउनथाल्यो । समितिका क्रियाकलाप अति नै एकमुखे र अनियमित हुन थाले । विभिन्न रूपमा राजनीतिक कलहले घेर्नथाल्यो । तथापि एस संस्थामा र भानुभक्तीय-वाङ्मय-परिशीलनमा आँफ्नु अल्लि गैरै सलँलग्नता भएकाले एस समितिबाट यो लेखक सहसा हट्न सकेको थिएन । पछि एस संस्थामा आँफ्नो

विशेष स्थान बनाउन दुइथरि राजनीतिक व्यक्तिहरुको बड्दो प्रतिस्पर्धा देखेपछि चाँइ एस लेखकलाइ एस समितिबाट टाडा बस्न बाद्ध्य हुन पऱ्यो।

एसरि विद्द्या-र-भाषासंस्कृतिको सामूहिक प्रयत्नद्वारा प्रचारगरि चुँदिखोलाका साथै तनुङजिल्लालाइ र नेपालिराष्ट्लाइ पनि उज्यालो बनाउन चलाय्येको एस पक्षको प्रयासमा सानुतिनु सहयोग पुऱ्याउन एस लेखकले अनुकूल पर्दा सक्तो चेष्टा गरेको थियो। इ चेष्टाहरुलाइ लिएर शिवशङ्कर आचार्य, ज्ञानहरि पण्डित, तीर्थराज आचार्य इत्त्यादि व्यक्तिले समयसमयमा एस लेखकलाइ लेखेका कतिपय प्रशंसात्मक पत्त्रहरु एस लेखकका सङ्ग्रहमा सुरक्षितै छन्। भानुसेवासमितिका हरिहरभटराइ-व्रत-राजआचार्यसमेतका उत्तराधिकारि सचिवहरुका अनुत्तरदायि कार्यशैलीले गर्दा २०२० संवत्‌देखिका समितिका सबै कागतपत्रहरु सुरक्षित हुन नसकेकाले सबै कुराको पूर्णविवरण चाँइ दुर्लभ हुनगएका छन्। सभाविवरणपुस्तिका समेतका धेरै कागतपत्र सोमनाथ पौडेलका घरमा रहेको समितिको दराज सार-सुर गर्दा दराजै किचिपिचि भएकाले छ्यान्नब्यान्न भै नष्ट हुनगएको बताइञ्छ। के भएको हो दैव जाने॥

## (च) भारतवर्षमा धार्मिक सामाजिक नयाँ परिस्थिति

वैदिक सनातन वर्णाश्रमधर्ममा विभिन्न पक्षबड समयसमयमा आघातहरु पर्दैआएका र परिरहेका देखिञ्चन्। (१) कतिपय दुष्ट व्यक्तिहरुबड आर्कालाइ ठग्नका लागि धर्माचरणको प्रदर्शन गर्निगरिँदैआएको र तेसबड धर्मविचारको प्रसारमा बाधा पर्दै आएको कुरा महाभारतादिका उक्तिहरुबड पनि देखिञ्च। धर्मलाइ लाटासुदालाइ बहकाउन, ठग्न र आँफ्नु दुनो अन्न्याय्यरूपले सोज्याउन प्रयोग गर्दा धर्ममा लोकको श्रद्धा घट्नु र धर्ममा आघात पर्नु स्वाभाविक कुरा हुञ्च। (२) भजनकीर्तनका, कथाप्रवचनका, अवैदिक यजनपूजनका र वर्धमान जिनका वा शाक्क्यसिंह बुद्धका जस्ता एकोहोरा अद्ध्यात्मज्ञानका प्रचारक तथा वेदादिशास्त्रविरुद्ध आचरण भएका तथाकथित सन्तमहात्माहरुका र पौराणिक व्रत-उपवास पूजाआँचा दानपुण्ण्य तीर्थयात्त्रा इत्त्यादिको मत्त्रै चर्चा र उपदेश गर्नि वेदको कुरै नगर्नि गुरुपुरेतहरुका चरित्त्रबड र क्रियाकलापबड पनि लोकमा धर्माधर्मको विवेक हराँउँदै जानाले वेदाद्ध्ययनादि-वैदिकसनातन-वर्णाश्रमधर्मानुसरणमा आघात पर्दै आएको देखिञ्च। (३) वैदिक धर्मानुयायिका परम्परामा जन्मेका व्यक्तिहरुको वैदिक-सनातन-वर्णाश्रम-धर्मको मूल रूपकोअज्ञानले र अविवेकले तथा वैदिक सनातन वर्णाश्रमधर्ममा अडेर अब जीवनयात्रा चलाउनै सकिँदैन भन्नि भावनाले पनि वैदिकधर्मविचारमा आघात पुगेको देखिञ्च। आँफ्नैघरमा भात खाइ नजिकैको विद्द्यालयमा पड्न जानि द्विजवटुकलाइ पनि राष्ट्रिय कार्यकारिशक्तिधरले गरेका दण्डविधानपूर्वकका व्यवस्थाले गर्दा बाद्ध्यतावश गरिएका स्पृश्श्याऽस्पृश्श्यादिनियमोल्लङ्घनले यथाशक्ति यथासम्भव शुद्धिव्यवस्था गरेमा केइ दोष नलाग्नि कुरा वैदिक-शास्त्रबाट सम्मत हुँदाहुँदै पनि विद्द्यालयादि सार्वजनिक स्थानमा स्पृश्श्यास्पृश्श्यको विचार राख्न नपाइनि इत्त्यादि कुरा लिइ लत्तो छोडि आँफ्ना घरमा स्वाधीन हुँदा पनि द्विजातिका शिखासूत्त्र-स्नानसन्ध्या-भक्ष्याभक्ष्यादिका नियममा अडिन प्रेरणा नगरिएको र ति नियममा राख्न प्रयास नगरिएको



देखिएबड र आँफ्ना देशमा आँफ्ना गाममा आँफ्ना घरमा कृषिवाणिज्ज्यादि स्वतन्त्र जीविकाको अवलम्बन गरि स्वाधीन रहँदा पनि स्नानसन्ध्योपासनादिका नियमको पालनामा ध्यान नदिय्येको कुराबड तथा देशकालपरिस्थिति-अन्सार् गर्न सकिनि र साद्ध्यलाग्निसम्म आचार गर्नि र कदाचित् बिरामिपर्दा परदेश जाँदा वा तेस्तै केइ पर्दा तेसमा पनि न्यूनता आएमा गर्न सकिनि सम्म साधारणगोदानादि प्रायश्चित्त गर्नि पनि नगरिएकाबड पनि उक्त भावना बड्दैगएको कुरा प्रष्ट हुञ्च। साथै पडाइमा वा राष्ट्रसेवादिकाममा लाग्न पर्दा पराधीनतामा परेकाले परिस्थितिवश आचारशैथिल्ल्य हुन गएकामा पनि पडाइ सिद्दिएपछि वा राष्ट्रसेवानिवृत्त भएपछि स्वाधीन हुँदा त यथाशक्ति गोदानादि प्रायश्चित्त गरेर स्वधर्माचारमा रहनु र यौवनमा भएका दुरितलाइ पाको भएपछि गरिएका सुकृतले मेटेर सुगति प्राप्त गर्नु उचित हुनि कुरा शास्त्रोपदिष्ट समेत हुनाले[१४] तेसै गर्न पर्निमा तेसो पनि नगरिएको देखिनाले पनि उक्त कुरा प्रष्ट हुञ्च। (४) वैदिक--सनातन-वर्णाश्रम-धर्मानुयायिका परम्परामा जन्मेका व्यक्तिहरुको राम्म्रै जीवनयात्त्रा चल्दाचल्दै पनि अधिक धनमानको र भौतिक सुखसुविधाको लोभले गर्दा तिनिहरु चरित्त्रभ्रष्ट हुँनजाँदा पनि वैदिक-सनातन-वर्णाश्रमधर्ममा आघात पर्न गएको अनुभव हुञ्च। विद्द्वान्‌मा र सदाचारिमा गनिएका र बाइर देखिनि तेसै प्रकारको चरित्त्रको दोहन गरि धनमान आर्जेका व्यक्तिहरुले पनि आँफ्ना सन्ततिलाइ आँफ्नु विद्द्याधर्मको परम्पराबड विमुख गराइ अर्थकामपरायणतातिर सोज्याएकाले अग्ग्रपङ्क्तिका योद्धा भाग्दा सेनामा भागदौड मच्चिएजस्तै स्थिति वैदिकसनातनवर्णाश्रमधर्मानुयायिहरुमा पनि उत्पन्न हुनगएको देखिञ्च। (५) ब्राह्मणादिवर्णका व्यक्तिहरुमा आत्मगौरवानुभूतिका र अद्ध्यात्मज्ञानका ह्रासले र दासमनोवृत्तिका विकासले पनि वैदिकसनातनवर्णाश्रमधर्ममा आघात पर्न गएको बुजिञ्च। (६) नानाथरि विधर्मिविदेशिहरुले पौराणिक कथाका हिरण्ण्यकशिपुले (द्र. भागवत ७।२।१०-१२) र कंसका मन्त्रिहरुले (द्र. भाग. १०।४।३९,४०) वैदिक वर्णाश्रमधर्मका मूल ब्राह्मणहरुलाइ र ऋषिहरुलाइ सिद्द्याउन प्रयास गरेझैंइँ नै शुद्ध ब्राह्मणकुलमा जन्मेका समेत गनिएका वा प्रतिभाशालि वर्णाश्रमधर्मि व्यक्तिहरुलाइ विदेशमा लगि वेदाद्ध्ययनादि -स्वधर्मबाट अत्यन्तै विमुख र अर्थकामपरायण भै भ्रष्ट बन्न प्रलोभन दिइ तथा वर्णाश्रमधर्ममर्यादा तोड्न अनेकप्रकारले प्रोत्साहित गरि कुलीन ब्राह्मणहरुलाइ सिद्द्याइ, वैदिक सनातनवर्णाश्रमधर्मको जरो नै कुआइ तथा हाम्म्रा देशका शिक्षानीति बनाउनिहरुलाइ पनि आँफ्ना वशमा पारि षड्यन्त्रपूर्ण शिक्षाप्रणालीद्वारा हाम्म्रै भाइछोराहरुलाइ नै हाम्म्रो धर्मका विरोधि बनाइ वैदिक-सनातन-वर्णाश्रमधर्मलाइ नष्ट गर्न प्रयास गरिरहेको बुजिएको र एस विषयमा वैदिकसनातनवर्णाश्रमधर्मानुयायि-हरुको राष्ट्रको अनुकूल राष्ट्रिय नीति कँइँ केइ नभएको प्रतीत हुनाले तथा विभिन्न वर्गका र समुदायका व्यक्तिहरु जानेर वा नजानेर वर्णाश्रमधर्ममर्यादाभङ्ग गर्न प्रवृत्त भएकाले पनि वैदिक-सनातन-वर्णाश्रमधर्ममा ठुलोऽऽ आघात पर्न गएको देखिञ्च। (७)ऐले भारतवर्षमा प्राशासनिक र सामाजिक परिस्थिति वैदिक-सनातन-वर्णाश्रमधर्मको

---

[१४]. यद् यौवने चरति विभ्रमेण सद् वाऽ सद् वा यादृशवँ वा यदा वा।
उत्तरे चेद् वयसि साधुवृत्तस् तदेवाऽस्स्य भवति नेतराणि॥
--बौधायनधर्मसूत्त्र १।१०।३३।

पालनको अत्यन्त प्रतिकूल हुँदै जानाले अवशिष्ट कतिपय धर्मशील व्यक्तिहरु पनि स्वधर्मपालन गर्नमा र आँफ्ना सन्ततिलाइ स्वधर्ममा वास्तविक रूपमा दीक्षित गर्नमा अत्त्यन्तै असमर्थ हुनि खण्ड परेकाले वैदिक-सनातन-वर्णाश्श्रमधर्मको जरै उखेलिनि र बिउ नै भुटिनि गरेर वैदिकसनातनवर्णाश्श्रम(हिन्दु)धर्ममा आघात पर्न थालेको देखिञ्च। अष्ट्रेलियामा आदिवासिहरुको उच्छेद गर्न "गोरानियम"-ले खेलेको इतिहासमा चर्चित भूमिका जस्तै भूमिका भारतवर्षमा वैदिक-सनातनवर्णाश्श्रमधर्मिहरुको उच्छेद गर्न पश्चिमाहरुका पुच्छरहरुले चलाएका वर्तमान प्राशासनिक शैक्षिक व्यवस्थाले खेल्न लागेको प्रतीत हुञ्छ।

## (छ) नेपालमा धार्मिक सामाजिक मर्यादामा अतिशिथिलता

भारतवर्षको उपर्युक्त परिस्थितिलें गर्दा ऐले नेपालि समाजमा धार्मिक सामाजिक मर्यादा अत्यन्तै शिथिल हुँदैगएको पनि देखिञ्च । अस्पर्शनीय-स्त्रीमाथि चडेको सामाजिक आरोप लागि केइसमय बन्धुवर्गबड अलग भएको व्यक्ति, बन्धुवर्गका समूहका मुखिञ्जेल छाति ठोकेर मैले रक्सि खानि गऱ्या छु लौ कल्ले क्याचौं भन्नि व्यक्ति, मत्ꣳालि स्वास्नि राखेर मूल बाटामा बसोबास गरि तेसैसित सराबर भै भक्ष्याभक्ष्यको केइ मर्यादा नराखि खानपान गर्नि व्यक्ति पनि प्रायश्चित्त विना नै तेसै ब्राह्मणका घरमा सराबर हुन थालेका देखिञ्चन्, सुनिञ्चन् । पुनर्विवाहितस्त्री भनि आशङ्कितस्त्री पनि उपाद्ध्याय ब्राह्मणका घरमा विनापरीक्षा नै अपत्योत्पादनार्थ स्वीकृत हुन थालेको देखिञ्च। पतनीय अनाचार गर्निहरुलाइ छोरि-बैनि दिन आँफुलाइ सदाचारपरायण ठान्निहरु पनि कत्ति नहिच्किचाउनि हुन थालेका पाँइञ्चन्। भारतवर्षबाइर म्लेच्छदेशमा पुस्तै बिताएकालाइ पनि ब्राह्मणैले पनि छोरि दिन थालेको देखिञ्च । घटिजातका पुरुषसित पोइला गै पतित भाकि छोरिलाइ घरमाइत गराउन पनि मै हुम् भन्नि ब्राह्मण पनि लाज नमान्नि हुन थालेका देखिञ्छन् र घटिजातलाइ बिया गरेरै छोरि दिएको हुम् भन्न पनि सङ्कोच नमान्नि भएका पनि पाँइञ्चन्[१५] । पोइला गाकि छोरिलाइ र कर्म नचलेकि छोरिलाइ भन्से बनाउन पनि बाउनहरु सङ्कोच नमान्नि हुनथालेका

---

१५ १९१० सालमा बनेको भनि मुद्द्रित अँइन्मा बिहाबरिको प्रकरणको नवम नियममा "उपाध्या ब्राह्मणले भात मिल्दा छोरि दिदा भात मिल्दा कुटुँवलाइ दि विहा गर्नु आफुभंदा कमि भात नमिलन्या जातकालाइ बुसिराजिले छोरि दिन्याको ऐनबमोजिमूको अंस सर्वस्वगरि आधि तेसै छोरिलाइ दिलाइ आधि इटाचपलि पुऱ्याइदिनु (सर्खार-दाखिल गर्नु). आफु भात नचलन्या कम जात भै उपाध्याका छोरि विह्या गर्न्यालाइ उपाध्याका कंन्याको करणि गर्न्याका ऐन वमोजिम सजाय गरि लोगन्या स्वास्नि छुट्याइदिनु जार हांन पाउदैन हान्या सर्वस्व गरि दामल गर्नु स्वास्नि जौना जातकाले विहा गऱ्याको हो उसै जातकि हुंछे" भन्नि व्यवस्था देखिञ्च। १९२९ सालमा छापिएका अँइन्मा पनि चौथो भागमा बिहाबरिका नवम नियममा नै र १९४५, १९६१, १९७५, १९८०, १९८४, १९८७ सालहरुमा छापिएका अँइन्हरुमा बिहाबरिका तेरौं नियममा तथा १९९२ सालमा छापिएका अँइन्मा बिहाबरिका बाइसौं नियममा यो व्यवस्था देखिञ्च। घटि जातकासित पोइला जानि स्त्री पतित हुञ्चे भन्नि कुरा याज्ञवल्क्यस्मृतिमा "नीचाभिगमनङ्ग गर्भपातनम् भर्तृहिंसनम् । विशेषपतनीयानि स्त्रीणामेतान्यपि द्ध्रुवम् " (३।२९७) भनि प्रष्ट पारिएको छ।



देखिञ्चन् । शुद्धै कुलमा जन्मेका ब्राह्मणवटुहरुको व्रतबन्ध पनि रतेउलिमा चटक भिके जस्तै हुन थालेको देखिञ्च । शिखा-सूत्त्र-स्नान-सन्ध्योपासन-भक्ष्याऽभक्ष्य-पेयाऽपेय-कार्याऽकार्यका वेदादिशास्त्रसम्मत परम्परागत नियमको पालना गर्नि कुरा अत्यन्तै विरल हुँदै गएको देखिन थालेको छ । "हाँमि शिखासूत्रको मत्लप् राख्तैनम्, नित्य-स्नान-सन्ध्योपासनको पनि ख़ास्ता गर्दैनम्, जाँडरक्सि सुँगुरकुखुरा लशुनप्याज छ्यापिच्याउ पनि खाञ्चम्, जो सित पनि नारिएर जाँ पनि दालभातै मस्सँऽ लफन्न्याऽर हिण्चम्, एस्ता विषयका बाउनका नियम बोक्रे हुन्, ब्राह्मणको आन्तर रूप पो मुख्ख्य हो त " भनि आँफ्नु बुजक्कडपना देखाउनि र तेस्तै व्यवहार गर्नि माञ्छे पनि ब्राह्मणसमाजभित्त्रै छ्यास्छ्यास्ति पाँइन थालेका देखिञ्चन् । प्रकाश रूपमा स्वच्छन्द भै अभक्ष्यभक्षण-म्लेच्छदेशगमनादि गम्भीर प्रकृतिका भ्रष्टाचार गर्नि मानिसहरु पनि शास्त्रको ख़ास्ता नगरि स्वसामर्थ्यासामर्थ्यको विचार नराखि गरिएका साधारण हल्काफुल्का कृत्यले प्रायश्चित्त भयो भनि समाजमा सराबर भै वैदिक शास्त्रीय धार्मिककृत्यका अधिकारिका रूपमा खडा हुन थालेको र "सदाचारि विद्द्वान् कुलीन सम्पन्न ब्राह्मण हुम्" भन्निहरुले पनि तिनको तेस्तो व्यवहारलाइ समर्थनै गर्न थालेको पाँइञ्च। प्रकाशरूपमा स्वच्छन्द भै म्लेच्छदेशगमन, शिखासूत्रत्याग, स्नानसन्ध्योपासन-त्याग, सुँगुरकुखुरा-लशुनप्याज-छ्यापिच्याउ-जाँडरक्सि इत्यादि अभक्ष्यको भक्षण अपेयको पान समेतका पतनीय अनाचारमा लागेका र तेसको प्रायश्चित्त पनि नगर्नि अनाचारबड निवृत्त पनि नहुनि वेदाद्ध्ययनविमुख ज्वाँइभानिचहरुलाइ पनि "वेदसम्मताचारद्वारा वेदको रक्षाका लागि नै ब्रह्माजिले ब्राह्मणलाइ ब्रह्मकर्मको (षट्कर्मको) अधिकार दिनुभएको हो" भन्नि बौधायनधर्मसूत्त्र(१।१८।२)-याज्ञवल्क्यस्मृति (१।११९८)-मनुस्मृति(१।९३-९९)इत्त्यादि मान्न्य धर्मशास्त्रका भनाइमा ध्यानै नदिइ ब्रह्मकर्ममा समेत लगाउनि पठितै ब्राह्मणहरु पनि छ्यास्छ्यासृति देखिन थालेका छन् । प्रकाश रूपमा स्वच्छन्द भै सुँगुर-कुखुरा, लशुनप्याज, छ्यापिच्याउ, हट्टालयको दाल-भात, जाँडरक्सि, सीधु-मधु-मैरेय इत्त्यादि अभक्ष्यको भक्षण र अपेयको पान, कुक्कुटपालन, श्वेतसूकरपालन इत्यादि पतनीय कर्म गर्नि र तेसको प्रकाश-प्रायश्चित्त नगरिकन मत्त्रै हैन उक्त प्रकारका दुष्कर्म पनि नछोडिकनै पौरोहित्त्य गर्न र उच्च आसनमा चडि कथापुराण भन्न तम्सिन पनि माञ्छे नहिच्किचाउनि हुन थालेका र तेस्तै व्यवहारलाइ किङ्कर्तव्यविमूढ समाजले स्वीकारगर्न पनि थालेको देखिञ्च । कुलीनै ब्राह्मणहरुलाइ पनि आत्मविस्मृतिले बेस्सरि ढाक्न थालेको पाइँञ्च र तिनिहरुबड समाजमा धर्ममर्यादास्थापनामा र सामाजिकन्यायस्थापनामा योगदान शून्य हुनथालेको देखिञ्च । एस परिस्थितिमा शास्त्रीय ब्राह्मणत्वको आधार सर्वथा उच्छिन्न हुन लागेकाले नेपालमा मत्त्रै हैन भारतवर्षमा नै वर्णाश्रममर्यादाको उच्छेद गर्न र उच्छेद भएको साबित गर्न खोज्नि परचक्क्रिहरुलाइ र "पौडेल खँदाल आदि बाउनका चेहरामा मङ्गोलियन प्रभाव प्रचुर मात्त्रामा देखिञ्च" इत्त्यादि भनि तिनिहरुसित स्यालभाका मिलाउनिहरुलाइ ऐतिहासिक रूपमा नेपाल समेत भारतवर्षमा शास्त्रीय ब्राह्मणत्वको सर्वथा उच्छेद भएको कुरा देखाउन कत्ति पनि गारो नपर्नि स्थिति अब एक पुस्तापछि नै आउन लागेको देखिञ्च ।

एसरि अनादि वैदिक परम्पराको र सुदीर्घ ऋषिवंशको नेपाल समेत भारतवर्षमा पूर्णतया उच्छेद हुन लागेको टुलुटुलु हेरि तेसका मूक सहयोगि भएर तथा एस कुराको चेतना नै नभएभैंइँ गरेर सक्रिय सहयोगि नै बन्न पुगेर पनि बस्नि कुरा धनि, बलि, विज्ञ, कुलीन मानिनिसमेत सबैजसो द्विजातिका लागि साधारण कुरा जस्तो हुन थालेको पाँइञ्च । आँफ्ना छोराछोरिलाइ शिक्षा दिन र तिनमा संस्कार हाल्न परचक्रिलाइ वा तिनका कार्यकर्ताजस्ता व्यक्तिलाइ सुम्पनु आँफ्नी पत्नीमा बीजाधान गर्न विजातीय निन्द्य पुरुषकाँहाँ पठाउनु जस्तै हो भन्नि कुरामा विचार पुऱ्याउन्नि माञ्छे अत्त्यन्तै दुर्लभ भएको देखिञ्च । प्रायः सबै नै अर्थकामप्रधान भएका देखिञ्चन् ।

## (ज)नेपालमा धार्मिक सांस्कृतिक परम्पराको अतिप्रतिकूल स्थिति

नेपालमा ऐले धार्मिक सामाजिक पतन तेतिसम्म भएजस्तो बुजिञ्च कि आँफ्नु जीवन, धन, विद्द्या, बुद्धि, धर्म, संस्कार, भाषा, राष्ट्र केइ भन्न नपाउँनि स्थिति हुँदा पनि नेपालि समाज किङ्कर्तव्यविमूढ भएर परचक्रिले र तिनका पुच्छरहरुले जता घसेट्यो उतै घसेटिनि घसेउ्टाको स्थितिमा पुगेको देखिञ्च ।

आँफ्ना बालबालिकालाइ ड्याड्डि–मम्मि भनाउनमा, विवाहोत्सवादिमा पनि अङ्रेजि गीतका रेकर्ड बजाउनमा, अङ्रेजि नाच नाच्नमा, अङ्रेजि गीत गाउनमा, मदिरा पिउनमा र जन्मोत्सवमा केक काट्नमा पनि गौरवानुभूति गरिनि वातावरण नेपालि समाजमा परचक्रिका पुच्छरहरुले खडा गराएको देखिञ्च ।

राष्ट्रका बहुसङ्ख्यक शिक्षित सन्ततिमा आँफ्नु जन्मभूमि भारतवर्षान्तर्गत हिमवत्खण्डस्थ नेपाल देशलाइ पुण्यभूमि र कर्मभूमि मान्नि भावना विकसित गर्नुको सट्टा परचक्रिहरुले र तिनका पुच्छरहरुले षड्यन्त्रपूर्वक चलाएका शिक्षाद्वारा र खडा गरेका अन्य परिस्थितिद्वारा तिनलाइ युरोप–अमेरिकाका पाल्तु कुत्ताहरुले खाएजत्तिको पौष्टिक खाना पनि हाँमिले खान पाय्येन, तेता जान पाए त पौष्टिक खाना खान पाँइँदो हो अनियन्त्रित कामोपभोग गर्न पाँइँदो हो र कृतार्थ भइँदो हो भञ्चन् कि भनेजस्ता र आँफ्नु धर्म–संस्कृतिका प्रतिपादक संस्कृतग्रन्थ छुनै नचाहानि, आँफ्नु धर्मसंस्कृतिका विषयमा अद्ध्ययन गर्नै नचाहानि, सुन्नै नचाहानि, तेसको चर्चै गर्न नचाहानि र आँफ्नु धर्मसंस्कृतिको वैचारिक र व्यावहारिक रूपमा तिरस्कार गर्नि बनाय्येको पाँइञ्च ।

सात समुद्द्रपारिका "तीर्थ"मा नन्वाइकन कोइ नेपालमा धार्मिक नेता पनि हुन नसक्नि, विद्द्वान्मा गनिन पनि नसक्नि, शिक्षाविद् पनि नमानिनि, जननायक पनि नकहलाउनि, महामानव पनि नबन्नि, राष्ट्रसञ्चालक बन्न पनि नसक्नि भन्नि विचार नेपालिहरुमा व्याप्त देखिञ्च । गुरुपुरेत समेत पश्चिमा गोराहरुको इस्क्कोन भन्नि संस्थाले तालिम गरेका सात समुद्द्रपारिका माञ्छेलाइ नै बनाउनि प्रयास समेत भएको कुरा प्रत्यक्ष बेहोरिएको छ । इस्क्कोनका व्यक्तिले "इस्क्कोनका क्रियाकलापबाट प्रभावित नहुनि नेपालका नेताले जनताको हित गर्न कसरि सक्लान्" भनि गरेका दाबालाइ सर्खारि पत्रिका गोर्खापत्रले (२०३८।७।४) नै प्रचार गरेको पनि देखिएको छ । "धर्म राजादेखि रङ्कसम्मलाइ सन्मार्गमा चल्न प्रेरणा दिनि(ओरत्त्र–परत्त्र सपार्नि तत्त्व हो" भन्नि वस्तुस्थितिलाइ भन्दा "धर्म अफिम हो, त्यो चतुराहरुको लाटासुदाहरुलाइ ठग्नि



जाल मत्रै हो" भन्नि मनाइलाइ चरितार्थ गर्नि गरेर चल्नि र वैदिक–सनातन–वर्णाश्रम–मर्यादामा खलल पार्न प्रयास गर्नि तथाकथित धार्मिक क्रियाकलापलाइ परचक्रिहरुका पुच्छरहरुले परचक्रिहरुकै आर्थिक समेत आडभरोसामा प्रोत्साहित गरि विभिन्न सङ्घसंस्थाद्वारा सञ्चालित गरेर नेपालि समाजमा वैदिक धार्मिक आस्था खलबल्याइ अन्नोलको स्थिति ल्याइ क्रिस्तानमतको प्रचारका लागि वातावरण बनाउन लागेको पनि देखिएको छ । विश्वहिन्दुमहासङ्घको काम तेस्तै प्रकारको देखिञ्च[१६] । सनातनधर्म–सेवासमितिले पनि आँफ्नु नामले माञ्छेहरुलाइ भुक्क्याएर उक्त प्रकारकै क्रियाकलाप गरेको देखिञ्च[१७] । उक्त समितिका प्रमुखले नेपालको सर्खारि रेडियोमा नियमित रूपमा कथित धर्मप्रवचन गर्नि ठेक्दारि उइलेइदेखि प्राप्त गरेको देखिएकाले समेत तेस समितिका उक्त प्रकारका क्रियाकलापलाइ पञ्चायतकालदेखि ऐलेसम्मनै सर्खारि संरक्षण प्राप्त भएको देखिञ्च । अद्द्वैतसंस्था पनि तेस्तै प्रकृतिको संस्था भएको र तेस्तै

---

१६. राजा वीरेन्द्रलाइ र उनकि रानिलाइ समेत विभिन्न रूपमा मुछेर, धेरै नेपालि राष्ट्रिय सम्पत्ति लगाएर, नेपालका मन्त्रिहरु र विश्वविद्द्यालयका उपकुलपतिहरु समेत संलग्न गराएर विश्व–हिन्दु–महासङ्घले नेपालमा गराएको द्वितीय विश्व–हिन्दुसम्मेलन(२०४४)मा विश्वहिन्दु– महासङ्घले वैदिक आदर्शको विरुद्ध राजालाइ "धर्मसम्राट्" घोषित गर्नि विवादोत्तेजक प्रयास गरेको र रानिका समक्षमा " जातिप्रथाले र अस्पृश्यताले हिन्दुत्वमा ठुलो क्षति पुऱ्याएको छ, तसर्थ हामि सङ्कल्प गर्दछम् कि हिन्दुसमाज र हिन्दुधर्म जातिभेदरहित होस्, एसका भाइभाइमा अस्पृश्श्यता खारिच गरियोस् । सबै हिन्दु बराबर र सबै हिन्दु ईश्श्वरका अंश भएकाले यो सङ्कल्प गरिएको छ कि हामि हिन्दुत्वका इ दुइ कलङ्क मेटेर फाल्छम्" भन्नि र " शान्तिका लागि सबै हिन्दुहरुको एकताका लागि सबै हिन्दुकालागि एउटै धर्म एउटै जात, एउटै समाज एउटै संस्कार भन्नि समाघोष (नारा) होस्" भन्नि स्वीकृत सङ्कल्पहरु अङ्रेजिमा पडेर सुनाएको देखियो । उक्त सङ्कल्पलाइ रेडियोनेपालले रिले गरेर प्रसारित गरेको थियो । गोर्खापत्रले पनि छापेको थियो । ("Resolutions Adopted by Vishwa Hindu Mahasammelana, March 24-28 (1988), Kathmandu, Nepal"-का ३१ र ३२ सङ्ख्याका सङ्कल्पहरु पड्नुहोस् । एस सम्बन्धमा २०४४।१२।१३–१७ मितिका गोर्खापत्रमा प्रकाशित विवरणहरु पनि पड्नुहोस्) ।

१७. "एस धम्मो सनन्तनो" भनि धम्मपदमा शाक्क्यसिंह बुद्धले भनेको "सनातनधर्म"-को आदर्श लिइ जाति–वर्ण–लिङ्गको भेद नगरि चलाइनि कथित धार्मिक क्रियाकलापलाइ वैदिक सनातनधर्मको क्रियाकलाप हो भनि सिदासादा श्रद्धालु धार्मिक सज्जनहरुलाइ भ्रममा पारि नेपालका वैदिकसनातनवर्णाश्रमधर्मानुयायि जनतामा समेत फिँजाउनमा प्रयत्नशील सनातनधर्मसेवासमितिका क्रियाकलापलाइपश्चिमाहरुद्वारा,तिनका सहकर्मि पुँजिपतिहरुद्वारा र नेपालकाजिल्लाप्रमुखअधिकारि–र–अञ्चलाधीशहरुद्वारा समेत संरक्षणर सहयोग दिय्येको र रेडियोनेपाल–गोर्खापत्र–नेपालटेलिविजनजस्ता सर्खारि सञ्चारमाद्ध्यमहरुले प्रसारित गर्नि गरेको कुराको समेत सङ्केत गरि उक्त विषयमा समेत वैदिकसनातनवर्णाश्रमधर्मानुयायि नेपालिहरुको ध्यान आकृष्ट गर्दै विद्द्वत्सभाका सभापति श्रीबुद्धिसागर पराजुलि मीमांसाचार्यबाट २०४३।१२।४ मितिमा प्रकाशित "हिन्दुधर्मको भ्रान्त व्याख्याबाट सावधान" भन्नि पर्चा पड्नुहोस् ।

क्रियाकलापमा सलँग्न भएको पाँइञ्च[१८]। विकृत आर्यसमाजि-संस्कार बोकेका नरहरि नाथका लहडमा चल्नि बृहदाद्ध्यात्मिक-परिषद्का क्रियाकलापहरु त एस विषयमा सबैभन्दा उग्र तथा विकृत खालका देखिञ्चन्[१९]। अनेक प्रकारका योगिका र

१८. अद्वैतसंस्थाले वैदिकसननातनवर्णाश्रमधर्मि-गुरुशिष्यमर्यादा-भङ्ग गर्निगरेको कुरा सबैले देखेजानेकै कुरा हो। अनाथालयमा पालिएका केटाहरुको अधिकार-अनधिकारको विचार नगरि उपनयन गर्न कुलीन ब्राम्हणहरुसमेतका सबै नेपालिहरुका धार्मिक क्रियाकलापमा समेत आँफ्नो निर्देशन र नियन्त्रण स्थापित गर्न चाहानि सर्वाधिकारवादि प्रञ्चायति शासकका इसारामा चल्नि सामाजिकसेवा-राष्ट्रिय-समन्वयपरिषद्-भित्रको हिन्दुधर्मसेवासमन्वय-समितिमा हुकुमले सभापतिमा राखिएका, अवैध रूपमा जनै लाइ टुपि राखि नेपालि द्विजातिका समेत धर्मगुरु बन्नमा पश्चिमा गोराहरुलाइ नेपालि राष्ट्रिय मान्यता दिलाउनमा कटिबद्ध खेमराज केशवशरणका निर्देशनमा अद्वैतसंस्थाले माञ्छे खटाएको हो भन्नि कुरा पनि विवेकशील वैदिकसनातनवर्णाश्रमधर्मिसमाजमा चर्चित कुरा हो। अद्ध्यात्म-चिन्तनका निमले खडा भएको अद्द्वैतसंस्था राजनीतिक क्रियाकलापमा सलँग्न भएका प्रमाणहरु पनि गोर्खापत्रमा पाँइञ्चन् (द्रष्टव्य - गोर्खापत्र २०४२।४।२१।२, २०४७।२।५, १३)। २०४२।४।२१।२ मितिको गोर्खापत्रमा "राजभक्ति ईश्वरभक्तिको सोपान" भन्नि लेखमा "देवेश्वरसरस्वती"-को "राजभक्ति सम्पूर्ण शास्त्रबाट समर्थित ईश्वरभक्तिको सोपान हो भन्ने उपदेश घरघरमा पुर्‍याउन संस्था (अद्वैतसंस्था) अग्रसर भैरहञ्छ" भन्नि उक्ति पाँइञ्छ। एसबड अद्द्वैतसंस्थाको भित्रि रूप उदाङ्डो हुञ्च।

१९ २०४६ संवत्का मङ्सिर-पुसमा काठमाण्डुमा बालाजिका नजिकमा बिस्नुमतिका तीरमा धनि-बलिहरुकाआडले नरहरि नाथले कोटिहोमका नामले वैदिकतान्त्रिकशास्त्रविधानविरुद्ध एउटा मनगडन्ते "धार्मिक आयोजन" गरेका थिए। तेसमा वर्ण-जाति-लिङ्गादिको शास्त्रमर्यादा तोडि कथित "उपनयन"-हरु पनि गरिएका थिए र माइकबाट गायत्री मन्त्र सुनाउनि समेतका काम गरिएका थिए। राजा वीरेन्द्र पनि उक्त आयोजनामा संलग्न भएको कुरा २०४६।९।१७।२ मितिमा गोर्खापत्रका मुखपृष्ठमा प्रकाशित चित्रले समेत देखाएको थियो। तेस आयोजनालाइ लिएर विद्द्वत्सभा-(काठमाण्डु-)का सभापतिबुद्धिसागर-पराजुलिमीमांसाचार्य-उपसभापतिलोकनाथढकाल-प्राचीनन्यायाचार्य-सचिवशिवराजआचार्य-शाङ्करवेदान्ताचार्य-सदस्यहरु-सोमनाथपौडेलवेदाचार्यराधाकृष्णअधिकारिधर्मशास्त्राचार्य-दुर्गाप्रसाददवाडिदर्शनाचार्य-विष्णुप्रसादज्ञवालिपुराणेतिहासाचार्यहरुले "धर्मलाइ धमिल्याउने प्रयास कसैका लागि पनि कल्ल्याणकारि हुँदैन" भन्नि शीर्षक दिइ एक वक्तव्य प्रकाशित गरेको देखिञ्च। सो वक्तव्य २०४६ संवत्का पुसका १७ गतेको साप्ताहिक जनज्योतिमा, २० गतेका साप्ताहिक मञ्चमा, २७ गतेका आरति साप्ताहिकमा, र नवरस साप्ताहिकमा, तथा २८ गतेका साप्ताहिक नेपालि आवाजमा प्रकाशित भएको पाँइञ्च। तिमद्दे साप्ताहिक मञ्चमा पूर्णरूपमा प्रकाशित उक्त वक्तव्यको रूप तललेखिए अनुसारको देखिञ्च - "आजभोलि वेद, स्मृति, पुराण, वेदाऽविरोधि आगम, शिष्टाचार इत्यादिबाट प्रतिपादित तथा परम्पराबाट आएको वैदिकसनातनवर्णाश्रमधर्मको स्वरूपलाइ नै अमर्यादित प्रचार-प्रसारले र अव्यवस्थित आचरणले धमिल्याइ नेपालि जनतामा भ्रम फैलाउने काम धेरै तिरबाट जोडतोडले भैरहेको देखिञ्छ। कोटिहोमादिका नामले स्त्रीशूद्द्रादिसमेतलाइ हवनाधिकार दिने गरि शास्त्रविधिहीन ब्राम्हणादिसम्पद्रहित यज्ञयागादिको आयोजना गर्ने र शास्त्रविधि, देश, काल, अधिकारि, वर्ण, जाति इत्यादिको कुनै विचारै नराखि गरिने सामूहिक व्रतबन्ध कन्याहरुको व्रतबन्ध इत्यादि अमर्यादित क्रियाकलापहरु चलाउने समेत कार्य नेपालि समाजका कतिपय धनि-बलि-प्रभावशालि

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ)



बाबाका[२०] शङ्कराचार्यका र महामण्डलेश्वरहरुका तथा नानाप्रकारका साधु-सन्तका रूपमा उब्बिइ-उब्ब्याइ अशास्त्रीय आचरणका[२१] प्रचारमा लागे-लगाएका माञ्छे पनि नेपालमा धेरै नै देखिञ्चन्। धार्मिक आचारविचारका विषयमा शुद्धकुलीन ब्राम्हणहरुको वेदादिशास्त्रसम्मत[२२] स्वाधीनतालाइ अनादिकालदेखि मान्यता प्राप्त भै आएकामा र

व्यक्तिका र संस्थाका समेत आडले गरिँदैरहेको देखिञ्छ। एस्ता शास्त्रविधिहीन र व्यक्तिविशेषका स्वेच्छाचारिताबाट चल्ने धर्मका नामले हुने अमर्यादित क्रियाकलापबाट वाञ्छित फल प्राप्त नहुने मात्र हैन, विपरीत (अनिष्ट) फल समेत प्राप्त हुञ्छ। धर्मलाइ धमिल्याउने प्रयास गर्नु कसैको लागि पनि कल्ल्याणकारि हुँदैन। तसर्थ तललेखिएका शास्त्रवचनहरुको समेत विचार गरि एस्ता क्रियाकलापबाट निवृत्त हुन र बच्न सबै नेपालिहरुलाइ सचेत गराइञ्छ।

यः शास्त्रविधिमुत्सृज्य वर्तते कामकारतः।
न स सिद्धिमवाप्नोति न सुखं न परां गतिम्॥ गीता १६।२३।
दुरिष्टैर् दुरधीतैश्च दुराम्नानैर् दुरागमैः।
विप्राणाङ् कर्मदोषैस् तैः प्रजानाञ् जायते भयम्॥
— वेदाङ्गज्योतिषभाष्योद्धृत स्मृतिवचन, श्लो. ४३।
धर्म एव हतो हन्ति धर्मो रक्षति रक्षितः।
तस्माद् धर्मो न हन्तव्यो मा नो धर्मो हतो वधीत्॥ मनु. ८।१५"।

२०. नरहरि नाथयोगि, कथित नेपालि बाबा तेजनाथ, खेमराज केशवशरण इत्यादि व्यक्तिहरु कोटिहोम-गायत्रीपुरश्चरण-पुराणवाचन-देवतामूर्तिप्रतिष्ठापन-पूजन-उपनयनादिकृत्यहरुमा ऋत्विक्, जापक पुराणवाचक पूजक मन्त्रदाता इत्यादिका रूपमा कतै जैसिलाइ नै प्रमुखता दिनि, कतै जैसि-उपाद्ध्याय सराबर गर्नि गरेर वैदिक-सनातन-वर्णाश्रमधर्मस्थितिमा खलल पार्न प्रवृत्त भएकाले र तिनैका क्रियाकलापलाइ कतिपय धनिबलिप्रभावशालि व्यक्तिहरुले सहयोग गर्नि र सर्खारि सञ्चारमाद्ध्यमहरुले प्रचार गर्नि गरेकाले सो कुरामा विद्वत्सभा-(काठमाण्डु-)ले वैदिकसनातनवर्णाश्रमधर्मानुयायिहरुको ध्यान आकृष्ट गरि शास्त्रको मर्यादा बचाउन र धर्मको तथा स्वकीय परम्पराको रक्षा गर्न आह्वान गर्दै २०४३।९।१७ मितिमा आँफ्नो पञ्चम सन्देश, २०४४।५।१ मितिमा षष्ठ सन्देश तथा २०४५।८।२८ मितिमा सप्तम सन्देश प्रकाशित गरेको बुजिञ्च।

२१. इ 'शङ्कराचार्य'-'महामण्डलेश्वर'-'साधुसन्त'-हरुको चरित्र तथा क्रिया-कलापको शास्त्रीयता-अशास्त्रीयताका विषयमा विवेकपूर्ण जानकारि प्राप्त गर्न 'वैदिक धर्म मूल रूपमा' भन्नि २०४५ संवत्मा प्रकाशित ग्रन्थको सन्न्यासिधर्मप्रकरण (पृ.२२३-२२८) र 'आद्द्य शङ्कराचार्य र आधुनिक शङ्कराचार्यहरु तथा महामण्डलेश्वरहरु र स्वामिहरु' भन्नि प्रकरण (पृ.२३०-२३४) पनि पढ्नुहोस्।

२२. 'राजा विना पनि ब्राम्हण रहनु उपपन्न छ, ब्राम्हण विना राजा रहन उपपन्न छैन' भन्नि मा.वा. शतपथब्राम्हणले (५।१।५।६) ब्राम्हणको स्वाधीनत्व देखाएको छ ; ब्राम्हणले मुख्य रूपमा लौकिकपुरुष-विशेषलाइ हैन सोमलाइ नै राजा मान्नि कुरा वेदमा स्पष्ट प्रतिपादित छ (मा.वा. शुक्लयजुर्वेद १०।१८ ; शत. ५।३।३।१२,५।४।२।३), 'राजा ब्राम्हणलाइ छोडेर अरुको नियामक हो' भन्नि कुरा गौतमधर्मसूत्रादि धर्मशास्त्रग्रन्थमा भनिएको छ ; ' धर्म-आचार-विचारमा संशय हुँदा राजाकहाँ तेस विषयमा जसो गरिञ्च तेसै गर्नु नभनेर 'धर्म-आचार-विचारमा संशय हुँदा तेस विषयमा विचारशील क्रियावान् चरित्रवान् स्वाधीन अक्रूर तथा अर्थकामपरायणताभन्दा माथि उठेका धर्मशील ब्राम्हणहरुले जसो गर्छन् तेसै गर्नु'

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ)

रामचन्द्र जस्ता मर्यादापुरुष राजा मत्रै हैन दुर्योधनजस्ता ऐश्वर्यमदमत्त राजा पनि ब्राह्मणहरुका अगाडि नतमस्तक हुनि भारतवर्षको इतिहास रैआएकामा नेपालका वर्तमान राजा वीरेन्द्र शुद्धकुलीन ब्राह्मणहरुको धार्मिकमर्यादा नानाप्रकारले खुँद्न-खुँदाउनमा प्रवृत्त भएको कुरा पनि माथि मूलमा र टिप्पणीमा उल्लिखित कुराहरुबाट समेत विभिन्न समयमा देखा पर्न आउनिगरेको पाँइञ्छ। यो कुरा लिच्छविकालदेखिका विभिन्नकालका नेपालि राजाहरुका परम्पराको[२३] पनि सर्वथा विरुद्ध देखिञ्च। अगि ब्रह्मगायत्री नपाउनि

भनि तैत्तिरीयोपनिषद्मा (१।११) भनिएको छ। एसबाट शुद्धकुलीन ब्राह्मणका जातिव्यवस्था-आचार-व्यवस्थाहरुमा उनिहरुको वेदादिशास्त्रसम्मत स्वाधीनता रहनपर्नि र रैआएको कुरा पनि देखिन आउँछ।

२३. (क) द्वितीय जयदेवले उल्लेख गरेका लिच्छविवंशका प्रथम राजा सुपुष्प-(पुष्पदेव-)ले नेपालदेशमा चातुर्वर्ण्यबस्ति बसालेको कुरा गोपालवंशावलिबाट देखिञ्च। मानदेव श्रुतिधर्मशास्त्रविहित धर्म गर्थे भन्नि कुरा काठमाण्डुकेलटोलको अभिलेखमा पाँइञ्च। थाङ्कोट-आदिनारायणस्थानको अभिलेखमा वसन्तदेवले ग्रामकुटुम्बिहरुमा ब्राह्मणहरुको अग्ग्र्यस्थान भएको कुरा लेखाएको पाँइञ्च। ललितपुर-भृङ्गारेश्वरको र बलम्बुको अभिलेखमा शिवदेवले आँफुलाइ 'सुविहितवर्णाश्रमस्थितिः' भन्नि विशेषण दिन लगाएको देखिञ्च। एसबाट लिच्छविकालमा वेदादिशास्त्रप्रतिपादित ब्राह्मणमर्यादाको राजाहरुले रक्षा गर्निगरेको देखिञ्च। (ख) शिम्बलवन-गड-राज्यमा (सिम्रौनगडका नान्यदेवले स्थापित गरेका मिथिला-राज्ज्यमा) त ब्राह्मणहरुलाइ वेदवेदाङ्ग पढ्न र स्वतन्त्रतापूर्वक शास्त्रसम्मत गृहस्थधर्मको पालना गर्न राजा-मन्त्रिहरुबाट पूर्ण सहयोग गरिन्थ्यो भन्नि कुरा हरिसिंहदेवका सान्धिविग्ग्रहिक चण्डेश्वर-आदिका लेखबाट देखिञ्च। (ग) कर्णालिप्रदेशका राजा पुण्यमल्लले आँफ्नु कनकपत्रमा शिवदेवपण्डितद्वारा "गाम् पङ्काद् ब्राह्मणीन् दास्स्याद् वृत्तिलँ लोपाद् द्विजवँ वधात्। मोचयन् मुच्यते पापादाजन्ममरणान्तिकात्" भन्नि उल्लेख गराएर ब्राह्मण प्रतिको आँफ्नो राज्ज्यको मान्यता स्पष्ट गरेका छन्। पुण्यमल्ललाइ "गार्ग्यायण-गौतमा-ऽत्रि-हारीता-ऽऽपस्तम्बादिधर्मशास्त्रनिपुण" भनिएको देखिएकाले पनि उनका राज्ज्यमा ऋषि-मुनि-ब्राह्मणहरुप्रति परमादर गरिनि कुरा देखिन आँउच। (घ) मल्लकालमा पनि "जयस्थितिमल्लले (पाहाडियाकान्यकुब्जब्राह्मण) कीर्तिनाथ उपाध्याय, मैथिलब्राह्मणरघुनाथझा रामनाथझा दक्षिणिब्राह्मणश्रीनाथभट्ट महीनाथभट्ट इ पाँचब्राह्मणहरु सर्वशास्त्रज्ञ र ठूला बुद्धिमान् हुनाले तिनिहरुका निर्णयले ठहरे-बमोजिम अगिअगि लोप भैरहेका आचारादि विषयको र जातका विषयको समेत यथाशास्त्र स्थिति बाँधि धर्मशास्त्र-नीतिशास्त्र-अनुसार राज्यशासन गरे" भन्नि वंशावलिमा उल्लेख पाँइनाले धर्मव्यवस्थामा शास्त्रज्ञ ब्राह्मणहरु नै सर्वोच्च निर्णायक मानिएको कुरा स्पष्ट हुञ्च। उपर्युक्त स्थितिमा देवब्राह्मणको मर्यादालाइ राजाको मर्यादाभन्दा स्पष्ट रूपमा माथि राखिएको देखिञ्च र देवब्राह्मणको व्यवस्था गर्दा "वेदमन्त्रस्मृतिपुराणादिबाट कृत्यमा गनति भएका कार्यहरु गर्नु गराउनु निषेध गरिएका कार्य नगर्नु नगराउनु" भनिएको देखिएकाले शुद्धकुलीन ब्राह्मणहरुलाइ धर्मका विषयमा शास्त्रकै शासनमा छोड्नि, राजाले तिनमा मनोमानि शासन नगर्नि गरिएको पनि देखिञ्च। (ङ) पाल्पादेखि चौदण्डिसम्म राज्य फैलाएका सेनराजाहरुका राज्यमा पनि ब्राह्मणहरुको अग्ग्र्यस्थान भएको कुरा ब्राह्मणलाइ पत्र लेख्ता राजाले पनि "प्रणामपूर्वकपत्त्रमिदम्" भनि लेख्नि गरेको देखिएबाट समेत बुजिञ्छ। (च) आधुनिक नेपालका राजाका पुर्खाहरुमद्दे रामसाहिका बाराँ स्थितिमा "गौब्राह्मनलाइ खानाकन दुःख हुञ्छ र राजालाइ प्रत्यवाय लाग्छ" भन्नि उल्लेख पाँइञ्छ। मार्न पर्नि अपराध गरेमा पनि ब्राह्मणलाइ नमार्नि मुडेर त्याग गरिदिनि व्यवस्था रामसाहिका पन्ध्रौं स्थितिमा देखिञ्च। धर्माधिकार अर्ज्याल ब्राह्मणहरुलाइ दिय्येको कुरा बाइसौं स्थितिमा पाँइञ्च। पृथ्वीनारायणले

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ)



गरेकाले पनि ऐले ब्रह्मगायत्री सुन्नि र उपनयनमा चण्डी पढ्नि गरिआएकाले पनि ऐले वेदै पढ्नि गरेकोकुरा समेत चर्चामाआएको पाँइञ्च। यो पनि वैदिकसनातनवर्णाश्रमधर्मका अनुयायि शुद्धकुलीन ब्राह्मणहरुको मर्यादामा खलल ल्याउनि नै कुरा देखिञ्च। शास्त्रीय आचार-विचार-व्यवहारका विषयमा नेपालमा शुद्धकुलीन (उपाद्ध्याय) ब्राह्मणहरुको मर्यादा अत्यन्तै विशिष्ट प्रकारको भएको कुरा नेपालका इतिहासले स्पष्ट रूपमा देखाएको छ। शुद्धकुलीन (उपाध्याय) ब्राह्मणहरुमा समेत निकटभूतकालसम्म भाउजु बेहोर्नि प्रथा थियो भनि कतिपय लेखकहरुले लेखेको कुरा युक्तिसङ्गत देखिँदैन[२४]। त्यो

"कचहरिपिछे यक्यक् पण्डीत राषि सास्त्रवमोजिम अदालत चलाउनु" भनि उपदेश दिएको देखिञ्च। इ कुराहरुबाट "चातुराश्रम्म्यधर्मश्च वेदधर्मश्च भारत। ब्राह्मणेनाऽनुगन्तव्व्या नान्यो विद्द्यात् कथञ्चन" भनि महाभारतले समेत प्रतिपादित गरेको (शान्तिपर्व ६५।९) ब्राह्मणमर्यादालाइ हिजोसम्म नेपालमा राजाहरुले पनि रक्षित गर्दैआएको देखिञ्च. कथञ्चित् राजाले त्यो मर्यादा तोडेमा ब्राह्मणहरुले त्यो मर्यादा स्थापित गर्न प्रयास गर्नि शास्त्रसम्मत (द्र. शान्ति. ७८।१९-२१) परम्पराको रणबहादुरसाहले तैरौंति (मैथिल)मिश्र ब्राह्मणकि विधवा छोरि पुनर्विवाहित कान्तवती बाहुनिमा जन्माएका प्रतिलोमज गीर्वाणयुद्धविक्क्रमलाइ शास्त्र (द्र. वीरमित्त्रोदय, राजनीतिप्रकाश, पृ. ३५-४२) लत्त्याइ राज्ज्याधिकार दिनि र तेसमा करकापले गुरुको स्वीकृति लिन खोज्नि रणबहादुरसाहका कामको यथाशक्ति दृढतापूर्वक कडा विरोध गरेर काशिका ब्राह्मण, गोर्खालिराजगुरुघरानाका व्यक्ति पण्डित गजराजमिश्रले निर्वाह गरेको हिजोको इतिहास पाँइञ्च (द्र. इतिहासप्रकाश, अङ्क १, पृ. १५-२१)। इतिहासशिरोमणि भनेर ठुलो बनाय्येका बाबुराम आचार्यले पछिआएर भने पनि रणबहादुरसाहका उक्त कार्यको समर्थन गर्नि प्रयास गर्दै नेपालको सङ्क्षिप्त वृत्तान्त -(खण्ड १, १०२-१०३ पृष्ठ)मा लेखेका "डोटिका राजा नागवम मल्लका विवाहिता बाहुनि भानुमतीपट्टिका छोरा गद्दिमा बसेकाले डोटिमा इनैका वंशमा मुकुट चलेर आएको थियो" इत्यादि कुरा गजराजमिश्रले अँगालेको शास्त्रसम्मत ब्राह्मणादर्शको विपरीत देखिञ्च। आधुनिक चाटुकार आसेगासे बाउनले इतिहासले देखाएको उपर्युक्त प्रकारको कुराका विरुद्ध लेखेका कुरा पनि तेस्तै देखिञ्चन्। "नेपालका राजाको प्रज्ञाप्रतिष्ठान"ले लेखकस्वका मोटा राशिका लोभमा पारेर "क्षत्रियले ब्राह्मणी, क्षत्रिय, वैश्य तथा उच्च शूद्रवर्णका स्त्रीसंसर्ग गरी जन्मेका जातक पनि क्षत्रिय मानिञ्छन्," "स्मृतिकारले व्यवस्था गरेको सूत, मागध, अम्बष्टम्म, पारशव आदिको परिगणन गर्ने व्यवस्था भारतमा पनि समाप्त भएको र नेपालमा यसको विभाजनरेखा पहिलेदेखि नै पाइदैन" इत्यादि लेख्न लगाइ प्रचार गराएको कुरा ('नेपालको सांस्कृतिक परम्परा र राजमुकुट' २०४५, पृ. १२७) पनि तेस्तै देखिञ्च। शासकनियन्त्रित साझाप्रकाशनले प्रकाशित गरेको जनकलालजिको 'हाम्रो समाज : एक अध्ययन' भन्नि ग्रन्थमा लेखिएका एसै प्रकारका कुरा पनि तेस्तै नै हुन्। वैदिक जाति-धर्मका विषयमा कुलीन विद्वान् सदाचारि ब्राह्मणले डर-लोभ-माया-मोहबड मुक्त भै वेदादिशास्त्रवचनानुसार बोलेका कुरा मान्न्य हुञ्चन्, अरु अज्ञ क्रीतदासहरुले मनपरि बोलेका कुरा मान्न्य हुँदैनन् भन्नि हाम्रो शास्त्रसम्मत परम्परा रै आएको छ।

२४. १८९३ संवत् आषाढ सुदि ७ को राजा राजेन्द्रविक्क्रमको रुक्का देखेर होला २०२२ संवत्मा मुद्द्रित १९१० संवत्को अँइन्को उपोद्घातमा मन्त्रिपरिषद्भा अध्यक्ष रहेका सूर्यबहादुर थापाले "रणबहादुरशाहका पालासम्म पनि चारवर्ण छत्तिसै जातमा भाउजू वेहोर्ने परम्परा चलेको थियो र त्यसलाइ बन्द गर्न तामापत्र लालमोहोर इत्यादि गरिए" भनि लेखेको देखिञ्च। तेसैका लहैलहैमा गएर होला इतिहासलेखक ढुण्ढिराज भण्डारिले पनि नेपालको आलोचनात्मक इतिहास-(२०२७)मा तृतीय खण्डका ८८ पृष्ठमा "त्यस कालमा नेपाली

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ)

भाउजु बेहोर्नि प्रथा रजपुतदेखिका जातको हो[२५] शुद्धकुलीन (उपाध्याय) ब्राह्मणहरुको हैन भन्नि कुरा प्रमाणहरु केलाउँदा देखिन आँउँच। कतिपय जैसि बाउनमा मामाकि छोरि

समाजभित्रको चारवर्ण र छत्तिसै जातिमा भाउजू वेहोर्ने प्रथा साधारण रूपमा प्रचलित थियो" भनि लेखेको देखिञ्च। उनले नेपालको उद्भव तथा विकासको विश्लेषणात्मक इतिहास-(२०४६)मा ४२७ पृष्ठमा पनि तेइ कुरा दोहोऱ्याएको पाँइञ्च। किन्तु यो कुरा युक्तिसङ्गत देखिँदैन। मनुस्मृतिमा (९।६४-६८) नियोगसम्मलाइ पनि निषेध गरिएको हुनाले र विधवाहरुलाइ ब्रह्मचर्यमा अडिन उपदेश गरिएको हुनाले (५।१५९,१६०) कलियुगमै हिजोसम्म नै नेपालि शुद्धकुलीन ब्राह्मणहरुमा तेस्तो भाउजु बेहोर्नि प्रथा चलिआएको थियो भनि मान्नु कत्तिपनि उपपन्न देखिँदैन। राजा महेन्द्रका २०२० संवत्का मुलुकि अँइन्मा मामाचेलि फुपुचेलि बियागर्नमा वा सानिमा-ठुलिमाका छोरि वियागर्नमा वा कुनै पनि प्रकारका भिन्न जातका स्त्री वियागर्नमा कसैका लागि पनि कुनै प्रतिबन्ध नलगाय्येको देखतैमा नेपालका चारवर्ण छत्तिसैजातले मामाचेलि फुपुचेलि वा सानिमा-ठुलिमाका छोरि वा जुनसुकै जातका स्त्री वियागर्नि कुरा तेस वेला सामान्य चलनमा चलेको भन्न मिल्च र ?

२५ . 'इतिहासप्रकाशमा सन्धिपत्रसङ्ग्रह' भन्नि पुस्तकमा ३७३ पृष्ठमा रामसाहका रानिमद्दे भौजाइ (निस्सन्तान सौताने दाजु क्षेत्र(छत्र)- साहकि विधवा पत्नी?) शशिरेखा पनि एक रानि भएकि र भौजाइपट्टिका छोरा प्राणसाह नारायणसाह विक्रमसाह भएको कुरा उल्लिखित देखिञ्च। एस कुराको पछिका इतिहासलेखकहरुले खण्डनैका लागि भने पनि चर्चा गर्न पर्निमा एस कुरालाइ चर्चामा ल्याउनै डराएको जस्तो देखिञ्च तापनि राजेन्द्रका अगिल्ला टिप्पणीमा उल्लिखित रुक्काको "विवाहिता साक्षत् भाउज्यूसंग विराउ गर्न यो कुरा ठुलो पाप रहेछ, आजसम्म जो जतिभयो सो भै गयो" भन्नि वाक्क्यांशले उक्त इतिहासतिर पनि सङ्केत गरेको हो कि भन्न सकिनि पनि देखिञ्च। १९१० संवत्को अँइन्को रजपुतको हाडनाताकरणिको प्रकरणको अट्ठारौँ नियममा (५३५ पृष्ठमा) "रजपुतजातले आफ्ना सधवा विधवा भाउज्यूको करणि गऱ्यामा अघिदेषि आजतक जौन रित चलि आयाको छ सो बमोजिम् आफ्ना आफ्ना जातमा रहंछन् अघिदेषि आजसम्म भै चली आयाको हुनाले आजको अैनमा मिलाइ अघिको कुरो नहेर्नु अघिकै सदर हुंछ" भनिएको र (पछि थप गरिएको) उन्नाइसौँ नियममा "१९१९ साल मिति वैसाष शुदि ३ रोज ६ का दिन देखि रजपुतजातले भाउज्यूलाइ स्वास्नि तुल्याइ नराषनु" इत्यादि भनिएको तथा एक्काइसौँ नियममा "भाउज्यू साहिनामा (सधवाको रजपुतजातले करणि गऱ्यो भन्या) साधुले सजाय नगरि छोड्या भन्या राजषत लाग्दैन जातैमा रहंछ" भनिएको पनि देखिएकाले रजपुतसम्ममा भाउजु बेहोर्नि प्रथा भएको देखिञ्च। तागाधारि क्षत्रियजातमा तेस्तो प्रथा भएको र तेसलाइ १९१० संवत्का अँइन्ले पनि सामान्यै रूपमा मान्यता दिएको कुरा तागाधारि क्षत्रियको हाडनाताकरणिका प्रकरणको सातौँ नियमले (पृ.५३९) देखाउँच। ठकुरिहरुमा जाजरकोटे ठकुरिमा एस्तो भाउजु बेहोर्नि प्रथा पछिसम्म नै रहेको कुरा "निजका (चन्द्रसम्सेरका) (पचभैया) छोराहरुले पनि आफ्नी सौतेनी आमा काञ्छी बडामहारानी बालकुमारी देवीलाई सानो जातकी हुन् भनी खुद्टामा नढोगी सलाम मात्र गर्न थाले। यिनले तेसो गरेको कारण जाजरकोटे यी ठकुरीहरूमा दाज्यूको मृत्युपछि भाउज्यूमा देवरको पूरा हक लाग्दो रहेछ। यो चलन ती जारकोटेहरूमा सामान्य कुरो भएकाले यिनी बालकुमारी देवी पनि त्यस्तै रहिछन्। सो कुरा श्री३चन्द्रले पनि विवाह गरी श्री३ बडामहारानी घोषित गरेपछि मात्र थाहापाए" भनि पुरुषोत्तमसम्सेर राणाले "श्री३हरूको तथ्य वृत्तान्त" भन्नि पुस्तकका दोस्रा भागका ५५-५६ पृष्ठमा लेखेकाले बुजिन आँउच। रजपुतहरुलाइ शूद्रकमलाकरादिमा शूद्रापुत्र र शूद्रधर्मा भनिएको तथा विश्वरूपादि श्रेष्ठ धर्मशास्त्रव्याक्ख्याताहरुले नियोगलाइ शूद्रविषयक भनेको देखिनाले रजपुतसम्ममा यो प्रथा रहेको हुनु युक्तिसङ्गत जस्तो देखिन आउँच।

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ )



बियागर्नि र तेसै पनि ल्याउनि चलन भएको कुरा इतिहासबाट देखिए पनि नेपालि शुद्धकुलीन (उपाध्याय) ब्राह्मणहरुमा तेस्तो चलन रहेको मान्न पनि सकिनि देखिँदैन[२६]। उपाध्याय ब्राह्मणहरुको आचारविचारमर्यादा विशिष्ट प्रकारको भएको कुरा नेपालको इतिहासबाट प्रष्टरूपमा देखिञ्च[२७]। उपाध्यायब्राह्मण बाहेक अरुले उपाध्यायब्राह्मण हुन्

१९१० संवत्का अँइन्मा पनि उपाद्ध्यायको हाडनाताकणिका प्रकरणमा भाउजुका विषयमा रजपुतजातमा वा तागाधारि क्षत्रियजातमा जस्तो कुनै छुट भएको नदेखिनाले समेत त्यो भाउजु बेहोर्नि प्रथा नेपालि उपाद्ध्याय ब्राह्मणहरुमा नभएकै देखिञ्च।

२६ . जैसिहरुमद्दे पाँचथपौलाका जैसिहरुले मामाकि छोरि बियागर्नि र तेसै पनि ल्याउनि गरेको कुरा १८८७ संवत् पौष वदि ११का राजा राजेन्द्रविक्क्रमका रुक्काबाट देखिञ्च। एस्तै कुराले होला जुम्लिजैसिहरुलाइ र डोटेलजैसिहरुलाइ अन्तका तिन लिङ्गदेखिका जैसिसित बराबर गरि व्यवहार गरेको देखिञ्च (द्रष्टव्य - १९१० संवत्को अँइन् पृ. ६५४, ६५६, ६५८, ६५९, ६६३, ६६४, ६६७, ६६८, ६६९, ६७०) । एस्तै कुनै व्यवहारलाइ लिएर बहकाइमा परेर १९१० संवत्का अँइन्मा बिहाबरिका प्रकरणका सत्रौँ नियममा "उपाध्या ब्राह्मण जैसि वाहुन् रजपूत तागाधारि क्षत्रिजात नमासिन्या मतुवालि जात मासिन्या मतुवालि जात पानि नचलन्या जात छोया छिटो हालनु पर्न्या जात गैह्र चार वर्ण छतिसै जातले आफ्नि आमाका एका वावुवाट जन्म्याका मामा सानि ठुली आमाका छोरि विहा गर्न्यालाइ षतवात लाग्दैन विहा गर्न्याका हातको भात षांनौ भंन्या जात मिल्दा भताहालाइ अडा अदालत अमालबाट १० रूपैया दंड गरि तेसैका हातको भात षुवाइ छाडिदिनु. जात मिल्दो नभया विह्या गर्न हुंछ भात षानाको कर लाग्दैन" भन्नि व्यवस्था गरिएको बुजिञ्छ। त्यो अँइन् बनाउँदा ठुला विद्द्वान् पुर्बिया उपाध्याय ब्राह्मणलाइ कौसलमा नराखिएको र शासकबाट अधिकार पाएर ठुला भएका विजयराज-नगेन्द्रराज-तीर्थराजहरुलाइ तेस विषयको शास्त्रीय स्थितिको र पुर्बिया उपाध्याय ब्राह्मणहरुको परम्पराको विशिष्टताको यथार्थ ज्ञान नभएको समेत हुनाले होला तेस्तो व्यवस्था गरिन पुगेको देखिञ्च। किन्तु तेस कुरामा उपाध्याय ब्राह्मणसमाजको ध्यान गएपछि तेसमा तुरुन्तै संशोधन गरिएको पनि बुजिञ्छ। तेसैले सुरेन्द्रविक्क्रमकै वा जङ्गबाहादुरकै पालामा १९२७ संवत्मा मुद्द्रित भएको अँइन्मा "उपाध्या ब्राह्मणवाहेक ..." भनि सो नियममा संशोधन गरिएको देखिञ्च। १९४५ संवत्का अँइन्को बिहाबरिका प्रकरणका दोस्रा नियममा पनि उक्त विषयमा "उपाध्याब्राह्मणबाहेक अरु गैह्र जातले ..." भनिएको देखिञ्च। १९९२ संवत्का अँइन्सम्ममा पनि बिहाबरिका आठौँ नियममा सापिण्ड्यका विषयमा "उपाध्याय ब्राह्मणबाहेक" भन्नि उल्लेख पाँइञ्च।

२७. उपाद्ध्यायब्राह्मणको बैशिष्ट्य देखाउनि "उपाध्याबाहेक" भन्नि उल्लेख १९१० सालको अँइन् भनि मुद्दित अँइन्मा धर्माधिकार प्रकरणको चौतिसौँ र एकचालिसौँ नियममा र अन्त पनि देखिञ्च।तेसै अँइन्को मदपानका प्रकरणका तिसौँ नियममा "उपाध्या ब्राह्मणले ... दालचिनि सुँतला अम्बा आप कटहर फल फुल जरिबुटि गैह्रको अरष षाया भन्या जनै झिकि भातवाहेक गरि मतवालि जतमा मिलाइ दिनु पानि चल्छ" भन्नि स्मृतिशास्त्रको भन्दा पनि कडा व्यवस्था गर्नि उल्लेख देखिञ्च भने तेत्तिसौँ नियममा तिनै चिज खाँदा रजपुत जैसि क्षेत्रि तागाधारिजातको जात नजानि भात पाँनि चल्नि २० रुप्पियाँ दण्डसम्म हुनि कुरा उल्लिखित पाँइञ्च। १९९२ संवत्का अँइन्मा अदलको चौथो नियममा "पूर्बीया उपाध्याय ब्राह्मण र पुराना कुमाञि उपाध्याय ब्राह्मणले लशुन छ्यापी प्याज च्याउ रामभिडा घरहाँस घरहाँसका फूल जानीजानी खाए अनाचार ठहर्छ, दण्ड हुञ्छ, पतिया गरि भातमा चल्छ" भन्नि उल्लेख पाँइञ्छ। एस्तै खालका कुरा अदलका सातौँ नियममा र अन्तपनि पाँइञ्चन्। एस्ता कुराबाट उपाध्याय ब्राह्मणका आचारविचारका परम्परामा धेरै विशेषता रैआएको र तिनलाइ शासकहरुले पनि मान्यता दिइ संरक्षित गर्दै आएको कुरा स्पष्ट हुञ्छ। एस्ता

(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ )

भनि ढाँट वा तेसै पनि उपाद्ध्याय ब्राह्मणले गर्निकाम गरेमा त्यो दण्डनीय अपराध[२८] वा निवर्तनीय कार्य[२९] मानिँदै आएको देखिञ्च । एसबाट पनि उपाध्याय ब्राह्मणको वैशिष्ट्यको रक्षा गर्नि काम नेपालि शासकहरुले पनि गर्दै आएको कुरा स्पष्ट हुञ्च ।

## (म्फ) नेपालमा वैदिकसमाजचिन्तकहरुको शोच्च्य स्थिति

ऐले उपर्युक्त स्थिति अन्यथा हुन गएकामा द्विजाग्ग्यहरु अगि सरि आँफ्नु धार्मिक मर्यादाको रक्षा गर्नि स्थितिमा खडा हुन पर्निमा उनिहरु अर्थदारिद्द्र्यले हो वा बुद्धिदारिद्र्यले हो आँफ्ना पुरोहितका लागि आवश्यक शिक्षाको व्यवस्था गर्न पनि विधर्मि विदेशिहरुको कृपाबाट प्राप्त धनका आधारमा चल्न पर्नि स्थितिमा पुगेको कुरा संस्कृत-विश्वविद्द्यालयको पौरोहित्त्यतालिमकार्यक्रमले सूचित गरेको देखिञ्च । (द्रष्टव्व्य-महेन्द्रसंस्कृतविश्वविद्द्यालय समाचार, वर्ष १, अङ्क १, २,) ।

---

विशिष्ट परम्पराको मर्यादा नराखि बनेका आधुनिक संविधानका र अँइन्का आधारमा निर्णय गर्नि, पश्चिमाहरुका देखासिकिमा चल्नि आधुनिक नेपालि अदालतका आधुनिक शिक्षा मात्र पाएका न्यायाधीशले जातभातका निम्ति प्रमाणका कोटिमा आउन नसक्नि प्रमाणपत्रका आधारमा कसैलाइ 'उपाध्याय नै हो' भनि ठहर गर्नि जस्तो नमिल्दो र उपहास्स्य कुरा (द्र. गोर्खापत्र २०४८।१।१८) ऐलेको हो, पुरानु परम्पराको हैन ।

२८ . १९१० संवत्को अँइन् भनि प्रकाशित अँइन्मा धर्माधिकारका प्रकरणमा चवालिसौं र पैंतालिसौँ नियममा "उपाध्या भनि जात छपाइ आर्कालाइ गोडाको पानि षुवाउन्या जैसिलाइ ६ मैन्हा अरू जातलाइ १८ मैन्हा कैद गर्नु. यस्तालाइ म्यादका रूपैया दिया पनि कैद नपुऱ्याइ नछाडनु.डवल दिया लि छाडि दिनु. उपाध्या भनि जात छपाइ टिकालाइ पुजाउन्या जैसिलाइ ४ मैन्हा अरूजातलाइ १२ मैन्हा कैद गर्नु. म्यादका रूपैया दिया अैन वमोजिम लि छाडि दिनु" भन्नि व्यवस्था देखिञ्छ । १९९२ संवत्का अँइन्मा पनि अदलको नवौँ नियममा "उपाध्यायबाहेक गैह्रजातले उपाध्याय भनी जात छपाई गोडाको पानी खुवाउने र टीका लाई पुजाउनेलाई बात लाग्छ " भन्नि उल्लेख पाँइञ्छ ।

२९ . १९१० संवत्को अँइन् भनि मुद्द्रित अँइन्मा धर्माधिकारका प्रकरणमा उनान्सत्तरियौं नियममा (४०४-४०५ पृष्ठमा) " जैसिवाहुन गैह्रले आफ्ना भात मिल्दा जैसिलाइ मात्रै चलिआयावमोजिम गायत्रि दिक्षा मंत्र सुनाउन हुंछ सुंन्या सुनाउन्या दुवैलाई वात लाग्दैन । अरु तागाधारि जात र आफुभंदा उपल्ला जैसिलाइ मंत्र सुनाउन हुँदैन । कसैले सुनायेछ भन्या उपाध्या व्राह्मणलाई सुनाउन्यालाई ५० रूपैया रजपुतजातलाईसुनाउन्यालाई ४० रूपैया तागाधारि क्षतृ जातलाई सुनाउन्यालाई ३० रूपैया आफुभंदा उपल्लाजातका जैसिलाइ सुनाउन्यालाइ २० रूपैया दंड गर्नु । जैसिवाट मंत्र सुंन्या उपाध्या रजपुत क्षतृ जात र घटिजातका जैसिवाट मंत्र सुंन्या उपल्ला जातका जैसी जातमा १६ वर्ष नाघ्याको भया मंत्र सुंन्यैलाइ मंत्र सुन्या १६ वर्ष मनिको रहेछ भन्या आफु अषत्यार भै मंत्र सुंन लाउन्या मुष्य जोहो उस्लाई एसै अैनको आधि आधिका दर्ले दंड गर्नु । दंड भया पछि उपाध्या रजपुत क्षेत्रिले फेरि उपाध्यै ब्राह्मणैबाट र जैसिवाहुनले उपाध्या आफुभन्दा उपल्ला जातका जैसि आफुमिल्दा जैसिबाट जातअनुसारको गायत्रि दिक्ष्या सुन्या पछि आफ्ना जातमा चल्छ" भन्नि उल्लेख पाँइञ्छ । एस्तै प्रकारको कुरा १९९२ संवत्का अँइन्मा जनै दिनेको प्रकरणका पञ्चम नियममा पनि देखिञ्च ।



"सबैलाइ आर्काका परिश्रममा बाँच्न र सुखसएलगर्न पुग्दैन र बहुसङ्ख्यक मान्छेले त आँफ्नै परिश्रमले आर्जेका साधनले नै सुख दुःख जस्तो पुग्च तेइ बेहोरि बाँच्न पर्च भने मैले पनि आँफ्नै क्षमतामा र परिश्रममा भर परेर विद्द्या, धर्म, सत्य, न्याय, वीरता, पराक्क्रम, कौशल, परिश्रम इत्यादि सद्गुणका आधारमा न्याय्य वृत्तिले आर्जेका धनद्रव्व्यले जस्तो पुग्च तेस्तो सुख दुःख भोगेर जीवनयात्त्रा चलाए के हुञ्च" भन्नि विचार कत्ति नगरि आँफ्ना क्षमतामा र परिश्रममा भर नपरि अन्न्याय्य सुखसुविधाका लोभमा फसि आशामुखि बनि चाकडिचुक्लि गरेर धनि -बलि-शोषक-सामन्तहरुलाइ अन्न्याय्य रूपमा अरु हजारन् व्यक्तिको भाग मोस्नि किल्ला बनाउन सहायता पुऱ्याउनि गरि काम गर्न तत्पर हुनि खालका हाम्म्रा समाजका अत्यधिक व्यक्तिहरुमा पाँइनि मनस्स्थितिका र धनि-बलि-शोषक-सामन्तहरुका आसुरभावका जरियाबाट खडा भएको अज्ञान-दारिद्द्र्य-दास्स्य-चक्क्ररूप भुमरिमा हाम्म्रो समाज फस्नाले हाम्म्रो सम्पूर्ण राष्ट्रनै भूमण्डलमा दीन हीन मगन्ते राष्ट्रका रूपमा रहन पुगेको देखिञ्च ।

वैदिक्-सनातन-वर्णाश्रमधर्मानुयायिका समाजको र राष्ट्रको एस्तो स्थिति हुँदा पनि हाम्म्रा वैदिक समाजशास्त्रि राष्ट्रधर्मचिन्तक मनीषिहरु को हुन् कता छन् के गर्दै छन् केइ अत्तोपत्तो पाँइदै नपाँइनि स्थिति आइपुगेको देखिञ्च ।

हिजोको पुस्ताका "विद्द्वच्छिरोमणि"-"पण्डितराज"-हरुले पनि एस्तो परिस्थिति आउन लागेको देखेर यो पुस्तालाइ विशेष मार्गनिर्देशन गरेर गएको केइ पाय्येन । अथवा तिनिहरुबाट एस्तो कुराको अपेक्षा गर्नु नै अविवेकिताको परिणाम जस्तो देखियो । ठुला घरमा टपरि टक्टक्याउन पाँउँदा आँफुलाइ कृतार्थ मान्नि ति जुठोसूतकका धर्मशास्त्रिहरुको राष्ट्रधर्ममा गम्भीर रूपमा विचार के पुग्थ्यो र । सोमनाथसिग्देल-पद्मप्रसाद-भटराइहरु नै नेपालमा संस्कृत-शिक्षाको जरो उखेल्नमा उपकरण बनेको देखिएकै हो । सोमनाथ-पद्मप्रसादहरुका चूडानाथभटराइ-गङ्गाधरपराजुलिप्रभृति "साक्षात् शिष्य्यहरु" नै पनि वैदिक-सनातन-वर्णाश्रम-धर्म-मर्यादा तोड्नमा पनि परचक्क्रिका पुच्छरहरुका उपकरणै हुन पुगेको पनि देखिँदैछ ।

## (ञ) शैक्षिक धार्मिक सामाजिक नएँ परिस्थितिमा आँफ्नो मौलिक पक्षको बचाउका लागि चालिएका केइ पाइला र प्रस्तुत प्रायश्चित्त-व्यवस्था

### (१) शैक्षिक पाइलो

आँफ्ना देशमा र समाजमा उपर्युक्त प्रकारको परिस्थिति खडा हुँदैगरेको देखि एस लेखकले आँफुले वेद-वेदाङ्गस्मृति-पुराणहरुको विशेष अध्ययन-मनन गर्नि, तिनको सार बुज्न र तिनले देखाएको जीवनयात्त्राको बाटो यथाशक्ति दृढतापूर्वक अनुसरण गर्न प्रयास गर्नि, आधुनिक समयमा काठमाण्डुमा हुर्केबडेका आँफ्ना छोराछोरिलाइ प्रारम्भमा कुनै विद्द्यालयमा नपठाइ घरैमा संस्कृतशिक्षा दिनि र तिनिहरुमा स्वधर्मसंस्कृति दृढ भै तिनिहरु अरुका बहकाइमा नलाग्नि भएपछि मात्त्र

संस्कृतविद्यालयमा पठाउनि, आँफ्नु घरमा वेदादिशास्त्राद्ध्ययनको र आचारको समुचित व्यवस्था सुदृढ गर्नि; आँफ्नु कुल -कुटुम्बमा, समाजमा र राष्ट्रमा विद्याको र वैदिक-सनातन-वर्णाश्रम-धर्म-संस्कृतिको प्रचार गर्न यथाशक्ति प्रयास गर्नि गर्न थालेको हो। एस सम्बन्धमा वेदाङ्गशिक्षा विषयको कौण्डिन्न्यायनशिक्षानामक ग्रन्थको रचना पूर्ण भएको छ मुद्द्रण पनि भएको छ, पणिनीयव्याकरणको परिष्कार गर्नि कार्य पनि पूर्ण भएको छ र तेसको वेदपरक व्याक्ख्या गर्न आँटिएको छ। अमरकोशशैलीको वेदभाषा निघण्टुको भूलोककाण्डको रचना पूर्ण भएको छ। अरु भागको रचना हुँदै छ। ब्रह्ममीमांसूत्रको वृत्ति निष्पन्नप्राय भएको छ। माद्ध्यन्दिनीयवाजसनेयिशुक्ल-यजुर्वेदाद्ध्यायि-नित्यकर्मसंस्कारकर्मादिमन्त्रसङ्ग्रह भन्नि एउटा वेदका मन्त्रहरुको व्यवहारोपयोगि सङ्ग्रह पनि निष्पन्न भएको छ। नारायणकृत हितोपदेशको सरलीकृत प्रतिसंस्कृत रूप पनि जनसाधारणको संस्कृतभाषामा रुचि बडाउनका लागि निष्पन्न गरिएको छ।

यास्क-पाणिनि-कात्त्यायन-पतञ्जलि-वररुचि-भर्तृहरि-नागेशहरुले प्रतिपादन गरेको हजारन् वर्षको चिन्तन-मननले खारिएको शाश्वत भाषाव्याकरण-दर्शनलाइ पञ्छाइ म्लेच्छका लहैलहैमा दकुरि नेस्फिल्ड्ग्रामर्को अनुकरण गरि बनाय्येको र राजाज्ञा- (अँइन्{१९८४}-र-खड्गनिसाना-)का बलले लादिएको नेपालि भाषा—व्याकरणका विरोधमा उब्बिइ २०२४ संवत्देखि एस लेखकले आँफ्ना विद्याधर्म—परम्पराको रक्षाका लागि राष्ट्रका अगाडि देखाऽ परि विशेष प्रयास गर्न थालेको हो। एस सम्बन्धमा एस लेखकका नेपालि वर्णोच्चारणशिक्षा (२०३१) र जिम्दो नेपालि भासा (पैलोखण्ड, २०३०; दोस्रो खण्ड २०३७) भन्नि ग्रन्थहरु र अरु धेरै लेखहरु प्रकाशित भएका छन्।

ठुला पण्डितका रूपमा देखाइ पालेर राखिएका सोमनाथ सिग्देल - पद्मप्रसाद-भटराइहरुलाइ पनि हस्ताक्षर गर्नलगाइ २०११ संवत्मा उड-कमिटिबाट गराय्येका सिफारिसका आधारमा नेपालका विभिन्न भागमा छरिइ सम्पूर्ण देशलाइ व्याप्त गरेर रहेका २३३ ओटा सानासाना ग्रामीण संस्कृतशिक्षणकेन्द्रहरुलाइ मासि नेपालमा संस्कृतशिक्षाको जरो उखेल्नि काम त्रिभुवन-र-महेन्द्रले गरेकामा २०२८ संवत्मा विधर्मि-विदेशिहरुकै इसाराले बनाय्येको नयाँ शिक्षायोजना(२०२८)द्वारा राजा वीरेन्द्रले नेपालमा अगिकै मूलोच्छेदनकार्यले अधमरा भएर रहेको संस्कृतशिक्षामा हरिदेवमिश्र-चूडानाथभटराइ-अम्बिकाप्रसादअधिकारि-विद्यानाथउपाध्याय (भट्ट)हरुलाइ समेत अगि सारि फेरि आर्को ठुलो आघात पार्न लागेकाले तेस कामका विरोधमा संस्कृत-शिक्षाप्रेमिहरुको सङ्घटन गर्न नेपाल-संस्कृत-परिषद्(२०२८)खोल्नमा एस लेखकले अगि सरि काम गरेको हो र संस्थापक-सचिव भै परिषद्को कार्यक्रमलाइ अगि बडाएको हो। एस परिषद्का अध्यक्ष जुननाथ पण्डित नायब बडागुरुज्यु भएपछि एस परिषद्का कार्यक्रममा शिथिलता आउन थाल्यो। निजलाइ टाडा राखि एस परिषद्को कार्यक्रमलाइ अगि बडाउनि विषयमा उत्साह गर्नि सहयोगिहरु नपाय्येकाले परिषद् तेसै थङ्गिएर रह्यो। तथापि परिषद्ले सामान्य कार्यक्रम चलाउँदै गयो। एस परिषद्ले संस्कृतमाध्यमिकविद्यालयको पाठ्यक्रम समुचित रूपको बनाउनि विषयमा र देशमा संस्कृतमाध्यमिक विद्यालयहरुको



सङ्ख्या बडाउनि विषयमा काम गर्दै आएको हो। पञ्चायतकालमा परिस्थिति अत्त्यन्त प्रतिकूल हुनाले उक्त विषयमा प्रत्त्यक्ष रूपमा अभीष्ट फल भने नगण्य रूपमा मात्र प्राप्त हुन सकेको हो। पाठ्यक्रममा कर्मकाण्ड राख्नि विषयमा,शास्त्रिपरीक्षोत्तीर्णव्यक्तिलाइ कार्यकालको शिक्षकप्रशिक्षण दिलाउनि विषयमा केइ सफलता प्राप्त भएको हो। एस संस्थाका अस्तित्त्वको र क्रियाकलापको परोक्षप्रभाव भने केइ भयो होला। नवस्थापित कथित प्रजातान्त्रिक वातावरणमा यो परिषद् आँफ्नु पूर्व आदर्श लिएर चल्नै नसक्नि स्थितिमा पुगेको हुनाले ऐले आँफ्नु राष्ट्रिय-कार्यकारि-शक्ति-धरलाइ नैतिक दबाब दिनि मौलिक आदर्शका दृष्टिले हेर्दा निष्क्रिय नै हुन पुगेको छ भन्न वा एसको आत्मा नै हराउनि स्थितिमा पुगेको छ भन्न सकिन्छ। तथापि "राष्ट्रिय शिक्षानीति" बन्न लागेका प्रसङ्गमा एस लेखकले चाँहिँ स्वाद्ध्यायशालाकुटुम्बका पक्षबाट "संस्कृतवाङ्मयको महत्त्व, नेपालमा संस्कृतवाङ्मयको संरक्षण-संवर्धनको प्रयास, संस्कृतशिक्षाको वर्तमान शोचनीय अवस्था तथा तेस अवस्थाको निराकरणको मार्ग" भन्नि पुस्तिका २०४८।९।२१ मितिमा प्रकाशित गरि नेपालका वर्तमान सम्पूर्ण सांसदहरुलाइ निश्शुल्क रूपमा उपलब्ध गराउनुका साथै तेसको शिक्षा-आयोगका सदस्स्यहरुमा तथा अरु विचारशील पठितव्यक्तिहरुमा प्रचार गरि संस्कृतशिक्षाका सबै पक्षको विकासका लागि नैतिक दबाब दिन आँफ्नु सक्तो प्रयास चलाइराखेको छ र भविष्यत्कालमा पनि यो प्रयास चलाइरनि विचार लिएको छ। "राष्ट्रिय शिक्षानीति" बन्न लागेका प्रसङ्गमा आरती साप्ताहिकमा २०४९।२।८।५ मितिमा "संस्कृतशिक्षाका सबै पक्षको विकास गर्न आह्वान" भन्नि वक्तव्य पनि स्वाद्ध्यायशालाकुटुम्बका पक्षबाट प्रकाशित गरेको छ। साथै उक्तमितिदेखि नै उक्त पत्त्रिकामा नै "राष्ट्रियशिक्षानीतिनिर्धारकलाइ खुलापत्र" भन्नि शीर्षकमा शिक्षाका शाश्वत र राष्ट्रिय उद्देश्य, नेपालको वर्तमान शिक्षा प्रणालीमा गर्न पर्नि परिवर्तनको दिशा, पृथक् संस्कृतशिक्षाधाराका विषयमा ज्वलन्त प्रश्नहरु, धर्मशिक्षाका रूपमा संस्कृतशिक्षा, शास्त्रशिक्षाका र प्राच्च्यविज्ञानप्रविधिशिक्षाका रूपमा संस्कृतशिक्षा, साधारणशिक्षाका रूपमा संस्कृतशिक्षा र संस्कृतशिक्षाको हुनपर्नि स्वरूपको सारांशरूप प्रस्ताव इ विषयमा सातओडा लेखहरु लगातार प्रकाशित गरि आँफ्ना पूर्व प्रकाशित र अप्रकाशित विचारहरु समेटेर प्रकाशित गराइ विवेकशील शिक्षाविद्हरुलाइ तथा विचारकहरुलाइ र सर्वसाधारण जनतालाइ पनि थाहादिइ राष्ट्रियशिक्षानीतिनिर्धारकहरुका समक्ष प्रस्तुत गरेर नेपालको शिक्षालाइ ठिक बाटातिर लगाउन आँफुले सक्नि प्रयास गरेको छ।

संस्कृतशिक्षाका विषयमा विशेष चिन्तन र प्रयोग गर्नि प्रसङ्गमा एस लेखकबाट आँफु हुर्केबडेको र आँफ्ना पूर्वजहरुको र ज्ञातिहरुको वास भएको गाम तनुङ-चुँदिबिसिको नयाँ वर्गीकरणअनुसार्को साधारण "निम्न"-माद्ध्यमिकविद्यालय-लाइ नवीन वर्गीकरण-अनुसार्को संस्कृतमाद्ध्यमिक विद्यालयका रूपमा उन्नत गर्न प्रयास थालियो। विभिन्न पक्षबाट विभिन्न प्रकारले प्रयास चल्दै सेलाउँदै रहे। संस्कृतशिक्षाकै आधारमा र धर्मका आडमा समेत पनि धनमान जोडेका आँफुलाइ संस्कृतशिक्षाको र वैदिकसनातनधर्मको ठुलो व्यक्तित्त्व ठान्नि माञ्छेहरु आँफ्ना छोरानातिलाइ म्लेच्छशिक्षामा र म्लेच्छचरित्त्रमा दीक्षित गरि चरित्रबल गुमाइ संस्कृतशिक्षाको प्रचारका लागि जनताका समक्षमा जान नसकिराखेकामा एस लेखकले

दूरदृष्टि-निष्ठा-त्याग-र-साहसले आँफ्नु चरित्र ठड्याइ संस्कृतशिक्षाका प्रचारका लागि जनतामा जानि काम मन्दै गतिमा भएपनि स्थिर रूपमा गरिँदै आएकाले एस लेखकबाट २०३८ - संवत्को - संशोधित - पाट्ठ्यक्रम-अन्सार् षष्ठ-सप्तमकक्षामा पूर्वव्यावसायिक विषयको सट्टा विशेष संस्कृत पड्नपडाउन पाँइनि व्यवस्था भएकाले उक्त "निम्न"माद्ध्यमिकविद्द्यालयमा षष्ठ-सप्तमकक्षाभा विशेष संस्कृतको पडाइ चलाउन प्रेरणा गरियो। तेसैमा पनि षष्ठ-सप्तमकक्षामा विशेष संस्कृत पडाउनि व्यवस्था संस्कृतमाध्यमिकविद्द्यालयमा जोडिएका षष्ठ-सप्तम कक्षाका लागि मत्रै हो भनि प्राशासनिक रूपमा भाँजाहाल्नि प्रयास भएकामा तेस प्रयासको व्रास्ता नगरि उक्त व्यवस्था चलाउन प्रेरणा र आडपयर गरियो। तथापि संस्कृतमाद्ध्यमिकविद्द्यालयको सङ्ख्या बडाउनि विषयको तेस बेलाको नेपालका सर्खारको अनुदार नीतिले गर्दा त्याँहाँ संस्कृतमाद्ध्यमिक कक्षा चलाउन आँट गर्न सकिएको थिएन। एस्तैमा यो लेखक नेपालका सर्खारको मन्त्रिपरिषद्को २०४१/१/६ मितिको निर्णयानुसार शिक्षामन्त्रालयको प.सङ्. ७९४/०४१-०४२, मिति २०४१/१/१५ को पत्रद्वारा संस्कृतविश्वविद्द्यालय-तयारिसमितिको एक सदस्स्यका रूपमा नियुक्त भएको थियो र तेस समितिले २०४१/४/२३ मितिमा आँफ्नु प्रतिवेदन प्रस्तुत गरेको थियो। नेपालमा संस्कृतविश्वविद्द्यालयको स्थापनाको एस उपक्क्रमलाइ र उक्त संस्कृतविश्वविद्द्यालय-तयारि -समितिले संस्कृतमाद्ध्यमिकविद्द्यालयको सङ्ख्या बडाउन दिएको जोडदार विचारलाइ समेत ध्यानमा राखि एस वेलामा चुँदिबिसिको भानु-संस्कृत-"निम्न"माद्ध्यमिक -विद्द्यालयमा संस्कृतमाद्ध्यमिक-विद्द्यालयका कक्षा चलाउनि कामलाइ अगि बडाएमा त यो कार्य अवश्य सफल होला भन्नि धारणाले एस लेखकले काठमाण्डुमा गरिएको केइ पूर्व-सम्मन्त्रणाका आधारमा २०४१ संवत्का असोज १९ गते (बडादसैंका भोलिपल्ट) भानुस्मृतिभवनमा चुँदिखोला-ओरिपरिका संस्कृतशिक्षाप्रेमिहरुलाइ भेलागराइ सबै कुरा देखाइ उठाय्येका प्रश्नहरुका उत्तर दिइ उपस्थित सबैको चित्त बुजाइ बडागुर्जुजुननाथ पण्डितको लिखित सन्देश समेत सभामा प्रस्तुत गरि प्रस्ताव गर्दा सबैको सहमति भै भानु-संस्कृत-"निम्न"माद्ध्यमिक-विद्द्यालय-(चुँदिबिसि-)मा संस्कृत-माद्ध्यमिक-विद्द्यालयका कक्षा चलाउन उपक्क्रम भएको हो। उक्त भेलामा उपस्थित व्यक्तिहरुको नामावलि एस प्रकार छ - शिवराज आचार्य, सूर्यनाथशर्मा पौडेल, शिवनाथ आचार्य, शिवभक्तशर्मा, रामभक्त, नारायणदत्तशास्त्री, उपप्रधानपञ्च रामकृष्ण ढकाल, आमोद आचार्य, साम्बराज आचार्य, दुर्गाभक्त ढकाल, गौरीनाथ ढकाल, विश्वनाथ आचार्य, तेजप्रसाद पौडेल, लेखबहादुर अधिकारी, गोविन्दप्रसाद, रामबहादुर घर्ति, कृष्णभक्त आचार्य, श्रीप्रसाद न्यौपाने, विज्ञान आचार्य, प्रयागराज न्यौपाने, विश्वराज पौडेल, विजय भट्टराइ, विनोद पौडेल, आनन्द पौडेल, नरबहादुर, दीलबहादुर, जगन्नाथ भट्टराइ, दुर्गाबहादुर अधिकारी, वि.शिवदत्त अर्याल, भरत पौडेल, श्रीभक्त आचार्य, कृष्णप्रसाद, हरिवल्लभ आचार्य, सोमराज सापकोटा, ढबुलाल, तीर्थराज न्यौपाने, माधवलाल न्यौपाने, सोमराज ढकाल, राजेन्द्र आचार्य, इन्द्रविलास आचार्य, विजयराज आचार्य, जगन्नाथ आचार्य, लक्ष्मीनाथ आचार्य, बाबुकृष्ण पौडेल, व्रतराज आचार्य, कृष्णहरिशर्मा, प्रयागदत्त आचार्य। एस भेलामा संस्कृतशिक्षाप्रेमि आस्तिक महिलाहरु पनि धेरै उपस्थित थिए, तर धेरै जसो महिलाहरु हस्ताक्षर गर्नमा अनभ्यस्त भएकाले



उनिहरुको हस्ताक्षर नभएको हुँदा तिनको नामावलि दिन सकिएन। उक्त भेलाले "यस क्षेत्रमा एक संस्कृतमाध्यमिकविद्यालय स्थापित गर्नका निमित्त निकै समय अघिदेखि नै प्रयास भैआएको भएतापनि हालसम्म यस कुरामा कुनै ठोस प्रगति हुन नसकेको हुँदा उक्त कार्यलाइ दृढताका साथ कार्यान्वयन गराउनका निम्ति एक समिति गठन गर्ने र उक्त समितिले आवश्यक निवेदन सम्बन्धित ठाउँमा पुर्‍याइ सकेसम्म आगामि शैक्षिक सत्रदेखि नै विद्यालय सञ्चालनगर्ने गरि कार्यवाही गर्ने" भन्नि प्रस्ताव स्वीकृत गरेको थियो र विजयराज आचार्यका संयोजकत्वमा शिवराज आचार्य, दुर्गाभक्त ढकाल, रामभक्त ढकाल, रामकृष्ण ढकाल, माधवलाल नेउपाने, तेजप्रसाद पौडेल, श्रीभक्त आचार्य, शम्पाउपाध्याय, व्रतराजआचार्य, भरतपौडेल, भानुसंस्कृत-"निम्न"माद्ध्यमिक-विद्द्यालयसञ्चालकसमितिका अध्यक्ष र उक्त विद्द्यालयका प्रधानाद्ध्यापक समेतको एक सहयोगसमिति बनाएको थियो।

एस प्रकारले पृष्ठभूमि बनेपछि २०४१ संवत्का पौषदेखि भानुसंस्कृत-"निम्न"-माद्ध्यमिकविद्द्यालय-(चुँदिबिसि-)मा संस्कृतमाद्ध्यमिक विद्द्यालयको अष्टमकक्षाको पडाइ थालियो। प्रारम्भमा तिँहिँका शिक्षक टीकाराज पौडेलले संस्कृतविषयको अद्ध्यापनको भार बोकिदिनुभयो। पछि काठमाण्डुबाट व्याकरणाचार्य भानुभक्त ग्यौमालिलाइ पठाय्यो। अरु गणितादि विषय मीनराजभटराइप्रभृति तिँहिँका शिक्षकहरुले पडाइदिनुभयो। आर्थिकभार भानुसंस्कृत"निम्न"माद्ध्यमिकविद्द्यालयसञ्चालकसमितिले आँफ्नु सञ्चितकोषका आधारमा बहनगर्‍यो। भवननिर्माणका अवसरमा पैलेइ वचन प्राप्त भएको तर उठ्न नसकिराखेको चन्दा उठाएर पनि पछि सो भार वहनगरिँदैगयो। अनि नएँ चन्दा पनि उठाय्यो। २०४३ संवत्का दशैंमा विद्द्यालयद्वारा नाटकप्रदर्शनको आयोजना गरि तेसबाट पनि केइ धनराशि जुटाय्यो। उक्त नाटकप्रदर्शनका आयोजनमा विद्द्यालयका शिक्षकविद्द्यार्थिहरुले र काठमाण्डुमा पड्नि दशैंमा घर फर्केका उच्च शिक्षाका विद्द्यार्थिहरुले ठुलो उत्साहले काम गरेका थिए। तिनमा प्रधानाध्यापक केदारभक्त आचार्य, गिरिराज आचार्य, हरिभक्त ढकाल, आनन्द पौडेल, आनन्द अर्जेल, आमोद आचार्य, विनोद पौडेल इत्त्यादि व्यक्तिको परिश्रम विशेष उल्लेखनीय थियो। भैलो खेलेर पनि केइ अर्थराशि जुटाय्येको थियो। भाइ डा. विजयराज आचार्यले पनि विद्द्यालयमा दन्तचिकित्साशिबिर चलाएर केइ अर्थराशि (रु.८१०।-) जुटाइदिएका थिए। २०४३ संवत्का साउनमा काठमाण्डुमा एक छुट्टै सहयोग समिति पनि बनेको थियो र तेसले पनि नाटकप्रदर्शनबाट दस-बार हजार जति रुप्प्याँको सहयोग जुटायो। रामचन्द्र पौडेलले पनि व्यक्तिगत प्रयासले दुइहजार रुप्पियाँजतिको सहयोग जुटाउनुभएको थियो। चुँदिखोला-ओरिपरिका काठमाण्डु-निवासि व्यक्तिहरुबाट विशेषचन्दा पनि उठाय्यो। श्रीभद्द्रशर्मा खनालका प्रेरणाले कुनै उद्द्योगपतिबाट पनि विशेषचन्दा प्राप्त भएको थियो। केइ समय (२०४४।४।१४-) भानुसंस्कृत-"निम्न"-माद्ध्यमिकविद्द्यालय-सञ्चालकसमितिको अध्यक्ष पदमा रहँदा र अरु वेला पनि हरिमाया देवी पौड्यालयाका विशेष सक्क्रियतामा नएँ चन्दा र पुरानु उठ्न बाँकि चन्दा समेत गरि बार हजार रुप्पियाँ जति चन्दा उठाय्येको थियो। एसरि सबैका सहयोगले उक्त संस्कृतमाद्ध्यमिकविद्द्यालयका अष्टम-नवम-दशम कक्षाहरु सुचारु रूपले चल्दै गए। एस लेखकले पनि माञ्छे जुटाइ शिष्टमण्डल बनाइ शिक्षामन्त्रिलाइ

भेटि निवेदन दिइ स्वीकृतिकालागि बारम्बार मन्त्रालयमा धाउनमा, सहयोगसमितिका स्थानीय व्यक्तिहरु साथमा लिइ पोखरासम्मपुगि स्वीकृतिको विषय अगि बडाउनमा, शिक्षकको व्यवस्था गर्नमा, शिक्षक जाँचि भर्ना गर्नमा सहयोग पुऱ्याउन सूचनापाँउनासाथ काठमाण्डुदेखि दकुरेर विद्यालयमा उपस्थित भै सोकार्य सम्पन्न गराउनमा, पाठ्यक्रम-पाट्ठ्यपुस्तकहरुको व्यवस्था मिलाउनमा, कक्षापरीक्षाका संस्कृत विषयका प्रश्नपत्रहरु बनाउनमा, प्रवेशिका-(एस्.एल.सि.)परीक्षाका पुराना प्रश्नपत्रहरु जुटाइ पठाइदिनमा, पडाइको सुव्यवस्था गर्न परामर्श उपलब्ध गराउनमा, निश्शुल्क रूपमा पडाउनकालागि आँफ्नु छोरो समेत पठाइ पडाइका व्यवस्थामा टेवा पुऱ्याउनमा र सक्तो आर्थिक सहयोग गर्नमा समेत अग्ग्रसर भै उक्त संस्कृतमाद्ध्यमिकविद्यालयलाइ उब्भ्याइछाड्नमा सहयोग गरेको हो । काठमाण्डुमा बनेको सहयोगसमितिले उक्त संस्कृतमाद्ध्यमिकविद्यालयलाइ स्वीकृत गराउनमा अपेक्षित मात्त्रामा क्रियाशीलता नदेखाएकामा र एस लेखकको व्यक्तिगत प्रयास सफल नभएकामा २०४४ संवत्का असारका अन्त्यमा राष्ट्रियपञ्चायतमा तनुङ्का प्रतिनिधि श्रीभद्रशर्मा खनालका प्रयासबाट उक्त संस्कृतमाद्ध्यमिकविद्यालयलाइ स्वीकृति प्राप्त भएको थियो । एसरि २०४४ संवत्सम्म पनि उक्त संस्कृतमाद्ध्यमिकविद्यालयले सर्खारबाट आर्थिक सहयोग पाउन नसकेको भए पनि परीक्षादिलाउन आवश्यक स्वीकृति २०४४ संवत्का असारका अन्त्यमा पायो र विद्यार्थिहरुले सजिलरि प्रवेशिका-(एस्.एल.सि.)परीक्षा दिनपाए । देशमा संस्कृतविश्वविद्यालय खुलिसकेका अवस्थामा जनताले पूर्वपश्चिम पाहाडमदेशमा खोलेका दस-बारओडा संस्कृतमाद्ध्यमिकविद्यालयहरुलाइ सर्खारले स्वीकृति र सहायता नदिनु कथमपि उचित नदेखिनि हुँदा सर्खारले बाद्ध्य भएर ति सबै विद्यालयहरुलाइ स्वीकृति र तिन-तिन माद्ध्यमिकशिक्षकको दरबन्दि पनि दिनि निर्णय गरेकाले भानु-संस्कृत-माद्ध्यमिक-विद्यालय-(चुँदिबिसि-)ले पनि तिन मा.वि. शिक्षकदरबन्दि पायो । एसमा तेस वेलाका सहायक शिक्षामन्त्रि क्षेत्त्रप्रताप अधिकारिको विशेष चेष्टा पनि भएको कुरा कोइ सुनाउथे । ऐले चौथो मा.वि. शिक्षकदरबन्दि पनि एस सं.मा.वि.ले पाएको छ । एसरि यो संस्कृतमाद्ध्यमिकविद्यालय उब्बिएपछि र एसबाट स्थानीय शिक्षित-र- शिक्षार्थि व्यक्तिहरुको केइ सुविधा बडेपछि एसलाइ विभिन्न रूपले समृद्ध पार्न र एसको उन्नति गर्नतिर पनि सबैले ध्यान दिन पर्नि हो र एसमा कार्यरत माद्ध्यमिकशिक्षकहरुले विशेषरूपमा समेत आँफ्नु वैदिक धर्मसंस्कृतिको रक्षा गर्नमा पनि केइनकेइ अतिरिक्त कार्यहरु पनि गर्न पर्नि हो; एस्तै काम हुन सक्ला भनेर नै एस लेखकले तेस विद्यालयलाइ उब्भ्याउनमा आँफुले सक्तो योगदान गरेको हो; तर अनुदार विचारका मनुष्यहरुका भावनामा अनुकूल परिवर्तन ल्याउन र "संस्कृतशिक्षा एउटा सनातन ज्योति हो, एसको सञ्चालन उचित वातावरणमा पवित्त्रतापूर्वक गर्नपर्च, अरु विभिन्न दृष्टिकोण प्रधान भएका व्यक्तिहरुभन्दा शुद्ध शैक्षिक सांस्कृतिक धार्मिक दृष्टिकोण प्रधान भएका व्यक्तिहरु अगि सर्न र सारिन आवश्यक छ" भन्नि कुरा बुजाउन नसकिएकाले एतातिर विशेष प्रगति हुन सकिराखेको देखिएको छैन ।

यो लेखक ऐले संस्कृतशिक्षाको शैक्षिककार्यक्रमलाइ कि पूजाकोठामा सीमित गर्नि कि आधुनिक विषयको अत्यधिक चापले स्ववैशिष्ट्यशून्य पार्नि, एसलाइ सन्तुलित र सर्वतोमुख भै समाजमा प्रभावकारि बन्न नदिनि गरेर संस्कृतशिक्षालाइ निष्प्राण बनाउन



परचक्रिहरुले र तिनका पुच्छरहरुले चलाएको षड्यन्त्रलाइ विफल बनाउन सक्तो प्रयास गर्दै छ । संस्कृतशिक्षा (१) धार्मिक दृष्टिले, (२) वेदवेदाङ्गादिशास्त्रको विशिष्ट अद्ध्ययनअद्ध्यापन चलाउनि दृष्टिले, (३) आयुर्वेद-ज्योतिषाऽऽदि जस्ता प्राच्च्य विज्ञानलाइ आधुनिक समाजको आवश्यकताको पनि कुनैनकुनै रूपमा पूर्ति गर्न सक्नि गरेर पड्निपडाउनि दृष्टिले, (४) शास्त्रीयताको गरुङ्डो भार नबोकाइकन हाम्रो आँफ्नो धर्मसंस्कृति-वाङ्मयपरम्पराको सामान्य ज्ञान गराउँदै व्यवहारोपयोगि संस्कृतमूलक साधारणशिक्षा दिनि दृष्टिले चलाइन पर्च भन्नि एस लेखकको धारणा छ । ऐले संस्कृतशिक्षामा प्रवृत्त हुनि मानिसहरुमद्दे ९९% साधारणशिक्षाका रूपमा संस्कृत पड्न चाहाञ्छन् भने हिजोअस्तिका शासकहरु र आजका राष्ट्रियशिक्षानीतिनिर्धारकहरु पनि साधारणशिक्षाका रूपमा संस्कृतशिक्षाको विकास-विस्तार गर्न अनिच्छुक पाय्येका छन् । मूलविषयको रूपमा हितोपदेशशैलीको सरल नीतिशास्त्र विषयको समावेश गर्नमा बाधा व्यवधान हालेर तिनिहरु "राणाहरु पञ्चतन्त्रको पठनपाठनमा प्रतिबन्ध लाउन चाहान्थे" भन्नि कुराको सम्जना गराउनि स्थितिमा बसिराखेका देखिञ्चन् । **शिक्षाआयोगको संस्कृतशिक्षाकार्यटोलिले पनि संस्कृतशिक्षाका सबैपक्षको समुचित विकास गर्नि र साधारणशिक्षाका रूपमा पनि संस्कृतशिक्षाको विकास विस्तार र सुदृढीकरण गर्नि कुरालाइ उचित महत्त्व दिन सकेको देखिएन** । संस्कृतशिक्षाको धार्मिकशिक्षापक्षलाइ बाधा पार्नि अङ्ग्रेजिभाषालाइ संस्कृतशिक्षामा अनिवार्य नगरि ऐच्छिक गर्नि सिफारिस गर्नुको साटो चौथोकक्षादेखि नै सबैलाइ अङ्ग्रेजि अनिवार्य गर्नि कुरामा बल पुऱ्याएको देखियो । तेसबाट समेत तेस टोलिले "यथा नियुक्तोस्मि तथा करोमि" भनेजस्तो गरेको देखियो । धेरै संस्कृतज्ञहरु पनि राष्ट्रिय स्तरमा शिक्षानीति बनाउनि प्रसङ्ग उठ्ता पनि संस्कृतभाषाको अनिवार्यतामा मात्र सीमित हुनि, सबै शिक्षाका सबै पक्षको त कुरै छोडम्, संस्कृतशिक्षाका सबै पक्षको समुचित विकासमा विचार पुऱ्याउनतिर पनि ध्यानै नदिनि स्थितिमा रहेको पाय्यो । **संस्कृतविश्वविद्यालय पनि नीतिशास्त्रको कवर्गीय विषयको रूपमा समावेश गर्नि प्रस्तावको उद्देश्यलाइ विफल पार्नि** अभिप्रायले हो कि अविवेकिताले **हो एस प्रस्तावको आशयको विरुद्ध** क्लिष्ट र विशिष्ट **शिक्षाकै रूपको प्राचीनराजशास्त्र** भन्नि **विषयको** समावेश गर्नतिर **लागेको देखिन्छ** । २००४ सालमा संस्कृतशिक्षामा भूगोल-इतिहास-विषयको समावेश गर्न गरिएको मागको चुरोमा संस्कृतशिक्षालाइ पूजाकोठे धार्मिकशिक्षाको र दार्शनिकशिक्षाको घेराबाट मुक्त गरि साधारणशिक्षाका रूपमा पनि लैजानि दृष्टिकोण देखिञ्च । तसर्थ त्यो माग ऐले पनि पुराभएको देखिँदैन । **२००४ सालमा उक्त माग गर्निहरुले र तिनका शिष्य-प्रशिष्यहरुले समेत आँफु राष्ट्रियकार्यकारिशक्तिका सन्निधिमा पुग्दा यो कुरा चटक्कै बिर्सेको र उक्त दृष्टिकोण नै गुमाएजस्तो बुजिञ्च** । ऐले पनि संस्कृतशिक्षाको शैक्षिककार्यक्रमलाइ एसमा प्रवृत्त हुनि शिक्षार्थिको हृदयमा रहनि उद्देश्यका दृष्टिले हेर्नि हो भने एस कार्यक्रमले "काशि जानु कुतिको बाटो" भन्नि नेपालि उखानलाइ चरितार्थ गर्च भन्न सकिञ्च । एसमा सुधार ल्याउन तिनिहरुले चासो नै नलिएजस्तो देखिञ्च । यो लेखक भने त्यो घुमाउरो बाटोलाइ सोजो पार्न यथाशक्ति राष्ट्रिय स्तरमा प्रयास

चलाउँदै छ । संस्कृतविश्वविद्यालयको निकम्मा शैक्षिककार्यक्रममा अपेक्षित सुधार गर्नीतिर ध्यान आकृष्ट गर्न, सभाबाट पारित लिखित निर्णय हेरेर निर्णयमा आँफ्नु असम्पति हुँदा असम्मतिटिप्पणी लेखि हस्ताक्षर गर्नि वैदिकपरम्पराका सभासद्ले अनादिकालदेखि उपभोग गर्दै आएको अधिकारको माग गरेर, सभाका पारिश्रमिकको परित्याग गरिकन पनि सभामा न्याय्य रूपमा व्यवहार गरेर, अरु उपाय नहुँदा सभाको परित्याग समेत गरेर, अधिकारिको अन्न्याय्य आदेशको अनादर गरेर, अधिकार नभएको मुकुण्डोको रूपमा मात्र प्रयोगगरिनि सदस्यतालाइ अस्स्वीकृत गरेर, पाठ्यक्रमनिर्माण-उत्तरपुस्तिकापरीक्षणादिकार्यको परित्याग समेत गरेर, एस लेखकले प्रयास चलाइआएको छ ।

## (२) धार्मिक सामाजिक पाइलो

२०३९ संवत्मा राष्ट्रिय-सामाजिक-सेवा-समन्वय-समितिले पश्चिमा गोराहरुको "इस्क्कोन्" भन्नि सङ्घलाइ नेपालमा वैदिक गुरुकुलको सञ्चालन र तेसका माद्ध्यमले गोराहरुद्वारा ब्राह्मणकुलोत्पन्नवटुहरुको समेत आचार्यत्वको ग्रहण, नेपालका कुनाकुनामा गुरुकुलहरुको र देवमन्दिरहरुको स्थापना, गोशालाको स्थापना इत्यादि कार्यक्रम चलाउन पाउनि गरेर स्वीकृतिदिन कार्बाइ गर्नलागेको कुरा चर्चामा आँउदा एस लेखकले विशिष्ट विद्द्वानूहरुको सहयोगबाट अग्ग्रसर भै सो कुराका विरोधमा पण्डितहरु जुटाइ छब्बिस जानाको हस्ताक्षर गराइ २०३९।१।३१ मितिमा ६१७ नम्बरमा सामाजिक सेवासमन्वयसमितिमा विरोधपत्र दर्तागराएको थियो । एस विषयमा गुरु बुद्धिसागर पराजुलि अगाडि उब्बिदिनुभएको थियो । उक्त कुरामा समितिले उचित ध्यान नदिएकाले फेरि चवालिस जाना पण्डितहरुको हस्ताक्षर गराइ उक्त समितिका अद्ध्यक्षमा निवेदन गर्नि र सो निवेदनलाइ सम्बोधनका स्थानमा शीर्षक राखेर प्रचारको पर्चाको रूप पनि दिइ छापेर काठमाण्डुमा व्यापक प्रचार गर्नि काममा पनि एस लेखकले सक्क्रिय रूपमा भागलिएको थियो । एस प्रचारलाइ पत्रपत्त्रिकाहरुले पनि स्थान दिएका थिए । तेसमा २०३९।२।३ मितिको गोर्खापत्त्र पनि द्रष्टव्व्य छ । एस सम्बन्धका कागतपत्रहरु अद्द्यावधि एसै लेखकका साथमा सुरक्षितै छन् । उक्त कार्बाइपछि एस्ता विषयमा काम गर्न एउटा स्थायि समिति हुनु उचित देखेर बडागुर्जुको सलॅंलग्नता नभएमा कतिपय बुडापाका पण्डित तेस स्थायिसमितिमा बस्न तत्पर नभएकाले तात्कालिक बडागुर्जु जुननाथ पण्डितका संरक्षकत्वमा २०४०।५।२२मितिमा एक विद्द्वत्सभा सङ्घटितगरियो । तेसमा सभापतिमा रहेका व्यक्तिलाइ एस सभाका सिद्धान्तका विरोधिहरुले लर्बन्याउन खोजेकामा त्यो प्रयासलाइ विफल गराय्यो । एस सभामा पैलेइ सचिवमा रहेका व्यक्तिलाइ पनि विरोधिहरुले लर्बन्याउन प्रयास गरेको बुजिन आएको र सो प्रयासबाट निज व्यक्ति प्रभावित नभै अडिन नसक्नि छाँट देखिन आएको हुँदा निजलाइ निजको पदावधि पूर्ण हुनासाथ सचिवपदबाट हटाइ यो लेखक विद्द्वत्सभाको सचिवपदमा नियुक्त गरिएको हो । यो लेखक सचिवपदमा रहेपछि प्रकाशित भएका विद्द्वत्सभाका चतुर्थ-पञ्चम-षष्ठ-सप्तमसन्देशहरुले सम्बद्धक्षेत्त्रमा ठुलो जागरण ल्याइदिएका छन् ।

एसै प्रसङ्गमा २०४२।९।१५ मितिमा विद्द्वत्सभाको चतुर्थ सन्देश प्रकाशित भएपछि तेस सन्देशका कुराहरुलाइ समाजमा भिजाउनि प्रयासका समेत रूपमा एस



लेखकले तेस सन्देशको आँफ्ना कुलमा र नाता-कटुम्बमा प्रचार गरेर तेस सम्बन्धमा आँफ्ना बन्धुवर्गको ध्यान विशेष रूपमा आकृष्ट गर्न थालेको हो ।

एसै प्रसङ्गमा "वर्तमान परिस्थितिमा इष्टमित्त्र-बन्धुवर्गमा परस्परमा धार्मिक सामाजिक व्यवहार गर्न मर्यादाको रेखा स्थापित गर्नि आवश्यकताका सम्बन्धमा विचारविमर्श गर्न २०४२।१२।१६।७ मितिमा १ बजे श्रीसोमनाथपौडेलका निवास-(कमलपोखरि-)मा उपस्थित हुन आमन्त्रण गर्दछु" भनि "एस सम्बन्धमा आधुनिक विचारकहरुका मनाइहरु र तिनका आधारभूत तर्कहरुको सूत्त्र रूपमा सङ्कलन गरिराख्न र विचारविमर्शका अवसरमा सो उपलब्ध गराउन समेत विशेष अनुरोध छ" भन्नि कुरा समेत उल्लिखित गरि तल लेखिएका व्यक्तिहरुलाइ सूचित गरियो । नामपछि उ. लेखिएका व्यक्तिहरुको उपस्थिति पनि भयो र प्रारम्भिक छलफलपनि भयो । तीर्थराजआचार्य उ., कृष्णचन्द्र आचार्य उ., सोमनाथ पौडेल उ., योगनाथ पौडेल उ., रामचन्द्र पौडेल उ., जगदीश पौडेल, पूर्णचन्द्र पौडेल उ., शरद् पौडेल, सत्यदेव आचार्य उ., राजेन्द्र आचार्य, वासुदेव आचार्य, भवदेव आचार्य, पशुपतिनाथ आचार्य उ., सुदीप आचार्य, मधुविलास आचार्य, लक्ष्मीविलास आचार्य, नरहरिआचार्य उ., विश्वनाथ ढकाल, दुर्गाभक्त ढकाल, गौरीनाथ ढकाल उ., व्रतराज आचार्य उ., साम्बराज आचार्य उ., विश्वराज आचार्य उ., सोमराज आचार्य उ., डा. हरिनाथ आचार्य उ., महेश आचार्य, विधान आचार्य उ., विज्ञान आचार्य, उत्तम आचार्य, व्यास आचार्य, श्रीभक्त आचार्य, शान्तिनाथ ढकाल, जुननाथ पण्डित, यदुनाथ खनाल वसन्तप्रकाश पौडेल, ज्ञानहरि पण्डित, रामचन्द्र पण्डित, दुर्गाप्रसाद दवाडि उ., शरद्पण्डित उ., शिवचन्द्र पण्डित उ. । तेसपछि अरु छलफलका लागि "वर्तमान परिस्थितिमा इष्टमित्त्रबन्धुवर्गमा परस्परमा धार्मिक सामाजिक व्यवहार गर्न मर्यादाको रेखा स्पष्ट गर्नि आवश्यकताका विषयमा २०४२।१२।१६ मितिमा भएको विचारविमर्शलाइ अगि बडाउनि सम्बन्धमा मर्यादाको रेखा श्रुति-स्मृति-पुराणादिशास्त्रका आधारमा स्पष्ट गर्नि कि आधुनिक मानवीय तर्कका आधारमा ? भन्नि विषयमा छलफल गर्न २०४३।३।१४।७ मितिमा दिनको १ बजे श्रीसोमनाथपौडेलका निवास-(कमलपोखरि-)मा उपस्थित हुन आमन्त्रण गर्दछु" भनि फेरि उपर्युक्त व्यक्तिहरुलाइ सूचित गरियो । किन्तु उक्त समयमा उपस्थिति अत्यन्तै पातलो भयो र काम अगाडि बड्न सकेन ।

उपर्युक्त प्रकारकै आमन्त्रणपत्त्र वितरण गरेर तनुङ-चुँदिबिसि श्रीकृष्णाचार्य-वाटिकामा २०४३।६।२७ मितिमा एक ब्रह्म्मसभाको आयोजना गरियो र बिग्ग्रँदो धार्मिक सामाजिक परिस्थितिको बोध गराइ "हाँमिलाइ धार्मिकमर्यादाको रेखा चाँइञ्च कि चाँइदैन ? चाँइञ्च भने त्यो रेखा वेदादिशास्त्रका आधारमा निश्चित गर्नि कि लोकरुचिप्रवृत्तिका आधारमा निश्चित गर्नि ? लोकरुचिप्रवृत्तिका आधारमा निश्चित गर्नि हो भने लोकरुचिप्रवृत्तिमा केइ व्यवस्था नदेखिनाले हाँम्प्रो धार्मिक मर्यादारेखा पनि अव्यवस्थित हुनजाला तेसमा के गर्नि ? इत्यादि प्रश्न अगाडि राखि समुचित व्यवस्था स्थापित गर्न काम गर्न आह्वान गरियो । तेसमा तल नाम लेखिएका व्यक्तिहरु उपस्थित थिए- विश्वनाथआचार्य (सपत्नीक), रमेशआचार्य, कृष्णविलासआचार्य (सपत्नीक), ऋषिविलास आचार्य, दुर्गाभक्त ढकाल, कपिल ढकाल, इन्द्रविलास आचार्य, विकास

आचार्य, कुलप्रसाद आचार्य (सपत्नीक), शिवनाथ आचार्य, सूर्यनाथ ढकाल (सपत्नीक), सूर्यनाथ आचार्य (सपत्नीक), केदारभक्तमाता, चेलिमायाँ, ऋषिभक्त ढकाल, रामभक्त ढकाल, विनोद ढकाल, शम्पामाता, शम्पापुत्री, जयन्तीप्रसाद पण्डित, रुद्द्रपण्डितपत्नी, विजयराज पण्डित, केदारनाथ अर्जेल, मुक्तिनाथ आचार्य, कृष्णभक्त आचार्य, श्यामभक्त आचार्य, तुलसी देवी, ज्ञानिशङ्कर आचार्य, जनकराजपत्नी; उर्मिला, प्रमोद, अञ्जु, सरस्वती; हरिनाथ आचार्य, प्रदीपभक्त आचार्य, शिवभक्त आचार्य, लक्ष्मीनाथ आचार्य, सुदर्शन आचार्य, विष्णुभक्त, सुलोचना; धर्मदत्त आचार्य, प्रयागदत्त आचार्य, कीर्तिवल्लभ आचार्य, मायानाथ आचार्य, नारायणदत्तशास्त्री (सपत्नीक), प्रभा, उदयनाथ आचार्य, राजेन्द्र आचार्य, लक्ष्मीराज आचार्य, धर्म; जानकी द्रेवी, व्रतराज आचार्य (सनूत्नपत्नीक), गिरिराजपत्नी, ज्ञानदा, मोक्षदा; रामप्रसाद आचार्य (सपत्नीक),मणि, माधव; विजयराज आचार्य, विज्ञान; काशिराज आचार्य, विधान, उत्तम; रामभक्त आचार्य (पत्नीद्वयसहित), व्यास, मञ्जु; गिरिजा, विनोद, सरस्वती; कृष्णचन्द्र पौडेल, प्रकाशचन्द्र; टीकाराज पौडेल, हरिकृष्ण; सूर्यनाथ पौडेल (सपत्नीक), भरत पौडेल; बाबुकृष्ण पौडेल (सपत्नीक), किरण; भैरव खनाल, द्रोणभद्द्र खनाल, रामचन्द्र भटराइ, बुद्धिसागर गुर्जु, रामचन्द्र गुर्जु, ज्ञानिशङ्कर वाग्ले, क.शिवराज वाग्ले, लोकनाथ पण्डित, वि.शिवप्रसाद अर्ज्याल, हल्दार नेउपाने, रणबहादुर रानाभाट्, सीताराम रानाभाट्, टेकबाहादुर रानाभाट्, डम्बरबाहादुर रानाभाट् इत्यादि । एस सभामा पनि सम्बद्ध विषयहरुमा एकएकगरि छलफल गर्नि र विषय अगि बडाइ व्यवस्था बसाल्नि काम हुन सकेन ।

एस्तैमा २०४५।१।२५ मितिमा रात्ति ९.३० बजे पशुपति- ब्रह्मनालमा पिताजि पण्डित कविराज नरनाथ आचार्यको स्थूल देह छुट्यो । पिताजिको अग्निसंस्कार गर्दा यो एउटा अतिमहत्त्वपूर्ण वैदिकसंस्कारकर्म भएकाले एसमा शिखासूत्र-स्नानसन्ध्योपासन-भक्ष्याभक्ष्यपेयापेयकार्याकार्यका परम्परागत शास्त्रसम्मत कुलीनब्राह्मणाचारमा नबसेका जातिब्राह्मण बन्धुवर्गलाइ नबोलाउनि निश्चय गरिएकाले बडागुर्जु जुननाथ पण्डित, श्रीतीर्थराज आचार्य, श्रीसोमनाथ पौडेल र श्रीरामचन्द्र पौडेललाइ मात्त्र बोलाय्येको थियो । बडागुर्जु भाइ विजयराजलाइ यथाशक्ति प्रायश्चित्त गराइ चोख्याइराखिएको थियो । बडागुर्जु जुननाथ पण्डित (१९६५-२०४७) वार्धक्क्यले र् रातको समय भएकाले आउन नसक्नुभएको हुँदा अरु तिनजाना बन्धुका उपस्थितिमा हाँमि चार भाइले (शिवराज-साम्बराज-विश्शवराज-विजयराजले) पिताजिको अग्निसंस्कार गरियो । विधवा भाउजु विष्णुमायाले वैदिकसनातनवर्णाश्रमधर्मानुयायि शुद्धकुलीन ब्राह्मणहरुको मूलशास्त्र स्वशाखावेद-मन्त्रसंहिताब्राह्मणोपनिषद्को तथा श्रौतगृह्यकल्पसूत्रहरुको मर्यादामा नबस्नि तान्त्रिक पाञ्चरात्त्रिक रामानुजीयवैष्णवमत लिइ धर्मफरक भएकिले र सो मत छोडि आँफ्नै कुलपरम्परागत वैदिकसनातनवर्णाश्रमधर्ममा रहन सासुससुराहरुले समेत भन्दा पनि नमानेकि हुनाले तिनलाइ पनि पिताजिका और्ध्वदेहिककर्ममा कुनै रूपमा पनि सम्मिलित गराय्येन । पिताजिका और्ध्वदेहिककर्मका समयमा, शास्त्रसङ्गति नदेखिए पनि लौकिकचलन-अन्सार् घिउचामल ल्याउनि बन्धुहरुलाइ "जुन घरको प्रमुख व्यक्ति पनि शिखासूत्र-स्नानसन्ध्याभक्ष्यामक्ष्य इत्यादिको परम्परागत शास्त्रीय नियमको पालन गर्दैन तेस घरबाट आएका अन्नको याँहाँ उपयोग हुँदैन क्यारे ल्याइहालिएच" भन्नि



कुरा सुनाउनि गरिएको थियो । अरुलाइ पनि "शिखासूत्रस्नानसन्ध्यादिका परम्परागत शास्त्रसम्मत नियमको पालना नगर्नि व्यक्तिको हाँम्म्रो शास्त्रीयकर्मका कालमा समीपमा उपस्थिति हाँमिले चाहेका छैनम्" भन्नि कुरा सुनाय्येको थियो । यो "पाखण्डिनश्च पतिता ये च वै नास्तिका जनाः। पुण्यकर्मणि तेषावैं वै सन्निधिर् नेष्यते क्वचित्"(स्कन्द-पुराणवचन,हेमाद्रिकृतदानखण्ड,पृ.१०९), "हीनाङ्गः पतितः कुष्ठी व्रणी पुल्कसनास्तिकौ । कुक्कुटश् शूकरश् श्वानो वर्ज्याश् श्राद्धेषु दूरतः"(देवलवचन,हेमाद्रिकृतश्राद्धखण्ड, पृ ५१५),"अपपात्त्रैश् श्वभिर् दुष्टैर् दर्शनं श्राद्धकर्मणः । वेदशाखा-सूत्त्रशाखाशिखाभ्रष्टैर् विशेषतः । शाखारण्डैर् नष्टवेदैस् सन्ततम् परिचक्क्षते" (लौगाक्षिस्मृति, स्मृतिसन्दर्भ, षष्ठभाग पृ. ३७९) "चाण्डालश्वपचौ वर्ज्यौ निवापे समुपस्थिते । काषायवासाः कुष्ठी वा पतितो ब्रह्म्महाऽपि वा ॥ सङ्कीर्णयोनिर् विप्रश्च सम्बन्धीपतितश्च यः । वर्जनीया बुधैरेते निवापेसमुपस्थिते" (महाभा.अनु.९१।४३,४४)इत्यादि शास्त्रवचनलाइ ध्यानमाराखि गरिएको कुरा हो । साथै आँफ्ना बन्धुवर्गको आँफ्ना कुलपरम्पराका शास्त्रीय आचार प्रति विशेष ध्यान आकृष्ट होस्, तिनलाइ नास्तिकताले नछोपोस् भनेर समेत तेसो भनिएको हो । तर असमझदारिले गर्दा एस्ता कुराको अनुकूल प्रभाव पर्न नसकेको बुजिनआयो ।

एस्तैमा २०४६ संवत्मा तनुङचुँदिबिसिमा "ब्राह्मणसमाजकल्याणगुठि" भन्नि निकाय स्थापित गर्नि उपक्क्रम भएच र तेसको विधानको रचना तीर्थराजआचार्य—रामचन्द्रपौडेल-विजयराजआचार्य-दुर्गाभक्तढकालहरुबाट भएच । तेस विधानको प्रतिलिपि बल्लतल्ल प्राप्त गरि पड्दा तेस विधानले वेद-स्मृति-पुराणादिप्रतिपादित र वेदादिविज्ञ शिष्टहरुबाट निर्णीत तथा आचरित हुँदै आएको हाँम्म्रो अनादि वैदिक—सनातनवर्णाश्रमधर्मको व्यवस्थालाइ तेस स्थितिबाट खसालि वेदादिशास्त्रज्ञान र आचार विचार पनि नभएका समेत साधारण मनुष्यका सहमति-असहमतिका आधारमा चल्नि व्यवस्थाका रूपमा लैजानि काम गर्न खोजेको देखियो । फेरि तेस विधानबाट शिखासूत्र-स्नानसन्ध्योपासन-भक्ष्याऽभक्ष्य-पेयाऽपेय-कार्याकार्यका परम्परागत शास्त्रीय शुद्धकुलीन—ब्राह्मणाचार त्याग्न र विवाहको मर्यादामा समेत खलल ल्याउन तथा वर्णसाङ्कर्य फैलाउन समेत प्रोत्साहन हुनि र परम्परागत शास्त्रसम्मत शुद्धकुलीन—ब्राह्मणाचारमा यथाशक्ति अडिन प्रयास गर्निलाइ असजिलो पर्नि समेत देखियो । कथित "धर्मशास्त्रमर्मज्ञ" "अग्निहोत्त्रि" सत्तरिवर्षकाटेका तीर्थराज आचार्य तेस्तो व्यवस्था स्वीकारगर्नि अवस्थामा पुगेको देख्ता लोकचरित्त्रको गहनताको केइ झल्का मिल्यो । "नष्टा श्रुतिस् स्मृतिर् लुप्ता प्रायेण पतिता द्विजाः । मलेन नाशिताश् शिष्टा हा वृद्धो वतति कलिः" भन्नि उक्ति बारम्बार सम्जनामा आयो । तेसै विधानका आधारमा काठमाण्डुमा उक्त गुठिको शाखा खोल्नि विषयमा भएका भेलामा "उक्त विधानलाइ हाम्म्रा समेत सम्मतिले संशोधन गरि अन्तिम रूप दिनि कार्य गर्न तीर्थराजआचार्यप्रभृति सबै तत्पर भए तेस विषयमा हाँमि सरिक हुञ्चम्, नत्त्र तेस विषयलाइ हामि कुनै मान्यता दिँदैनम्" भनि एस लेखकले भन्दा उक्त कार्य गर्नि उचित तत्परता नदेखाय्येकाले साम्बराज आचार्य -विश्वराज आचार्य-आमोदआचार्य-प्रमोदआचार्य-सुमोदआचार्य-जयन्तआचार्य-पराशरआचार्य-अनन्तआचार्य-समेत एस लेखकले तेस भेलाको परित्याग गरेको हो ।

एस लेखकले शिखासूत्रस्नानसन्ध्योपासनादिका व्रतमा अडिनि सङ्कल्प नगरि गरिनि-गराइनि ब्राह्मणका व्रतबन्धकृत्यमा र शास्त्रमर्यादा नराखि गरिनि अरु धर्मकृत्यमा पनि आँफु सलुँलग्न नहुनि दृढता लिइ शास्त्र-धर्मरक्षापट्टि आँफ्ना इष्टमित्रबन्धुवर्गको ध्यान आकृष्ट गर्न प्रयास गर्दैआएको छ र वैदिकधर्मशास्त्र-मर्यादालाइ तोडेर त दायभाग (अंश) पनि नलिनि दृढता लिइ कुटुम्ब-ग्राम-राष्ट्र-भूलोकमा वैदिकधर्मशास्त्रविचारको तरङ्ग उठाउन पूर्ण प्रयास गरिरहेको छ।

एस लेखकले "वैदिक धर्म मूल रूपमा" भन्नि पुस्तक २०४५ संवत्मा प्रकाशितगरेर तथा "वैदिकसनातनवर्णाश्रमधर्म र एसका उपज अरु उपधर्महरु तथा स्वधर्मरक्क्षाका लागि वर्णाश्रमधर्मानुयायिहरुको कर्तव्य" भन्नि पुस्तिकाको प्रचार गरि वैदिकसनातनवर्णाश्रमधर्मचर्चाशिबिरहरुको आयोजना गरेर समेत आधुनिकपरिस्थितिको माग-अन्सार् वैदिकधर्मको भावनात्मक पक्षको सुदृढीकरण गर्नीतिर र शास्त्रको मर्यादा बचाइ स्वसामर्थ्य-देश-काल-परिस्थिति-अन्सार् यथासम्भव छोड्करि वा अतिछोड्करि रूपमा भने पनि आँफ्नु धर्मको अनुसरण गर्नि बाटो वैदिकधर्मानुयायिहरुलाइ प्रष्ट गरि देखाउनतिर यथाशक्ति यथावसर प्रयास गर्दै आएको छ। "संवैधानिक हिन्दुराज्यको चरित्त्र र आवश्यकता के कस्तो ?" भन्नि र "नेपालमा लोकतन्त्र दरो र दिगो कसरि होला?" भन्नि तथा "वैदिकसमाजवादि-लोकतान्त्रिक-संस्कार-प्रवर्धन-सभाको आह्वान तथा उद्देश्य सिद्धान्त र कार्यक्रम"भन्नि प्रकाशनहरुद्वारा वैदिकधर्मानुयायिहरुको राष्ट्रधर्म का विषयमा पनि सजानपद व्यक्तिहरुको ध्यान आकृष्ट गर्न प्रयास गरेकोछ। आँफु यथाशक्ति दृढतापूर्वक वैदिक सनातनवर्णाश्रमधर्मको बाटो समातेर चल्न प्रयास गर्दैछ।

यो लेखक भारतवर्षीय वैदिकआर्यहरुको राष्ट्रियताका दृष्टिले पनि प्रस्तुत प्राशिचत्त-व्यवस्थाको गम्भीर महत्त्व छ भन्नि विचार लिएर प्रस्तुत प्रायश्चित्त-व्यवस्था प्राप्त गर्न र तदनुसार काम गर्न सरिक भएको हो।

### (३) प्रायश्चित्तसम्बन्धि पाइलो

एस लेखकका कान्छा भाइ इञ्जिनियर् सोमराजआचार्य इञ्जिनियरिङ्कलाको उच्चतर अद्ध्ययनका लागि दुइ वर्षसम्म अमेरिका बसि आएकामा एस लेखकका उक्तप्रकारको विचारको र प्रयासको फलस्वरूप आमा गङ्गामायादेवीका आज्ञाबाट समेत निजलाइ भारतवर्षबहिर्गमनविधर्मिविदेशिसहवाससहभोजनादिदुरितप्रायश्चित्त गराउनि व्यवस्था गरिएको हो।

एस प्रायश्चित्तका लागि पैलेइ पूर्वबडागुर्जु-जुननाथ पण्डितसमेतका आफन्त नेपालि पण्डितहरुबाटै व्यवस्था मागिएको हो। किन्तु विविध काम कुरा भै धेरै कालक्षेपण भएपछि जुननाथ पण्डितले स्वहस्ताक्षरले लेखि दिनुभएको एक लेखबाट समेत नेपालि पण्डितहरुबाट सो व्यवस्थाप्राप्त हुन नसक्नि देखिन आएकाले काशिका [३०] विद्द्वान्

३०.१९९२ संवत्का अँइन्मा बिहाबरिका आठौं नियममा "तेस्तो पञ्चमपञ्चममा विवाह गर्न हुने शास्त्र ऋषिहरुका वचनहरु देखिएको गुरु प्रोहित पण्डित शास्त्रीहरुले सम्मति दिएका र काशी
(अवशिष्ट टिप्पणी आर्को पृष्ठमा छ)



ब्राह्मणहरुबाट व्यवस्था मागि तदनुसार प्रायश्चित्त गराय्येको हो। प्रायश्चित्तप्रक्रिया-सम्बन्धि सङ्क्षिप्त विवरण तल प्रस्तुत छ —

मुख्य प्रायश्चित्तीय व्यक्ति सोमराजआचार्यले प्रायश्चित्त गर्दा २०४८।८।१३ मितिमा काठमाण्डु लाजिम्पाटस्थित सोमराजआचार्यकै घरआँगनमा ब्राह्मणोपवेशन, प्रायश्चित्तार्थिको सचैल स्नान, ब्राह्मण-प्रदक्षिणा, दण्डवत् प्रणाम, दक्षिणा-निधान, पारिषद्य-ब्राह्मणकर्तृक प्रश्न, दुरितनिवेदन, प्रार्थना, प्रणाम, निवेदकापसारण, ब्राह्मण-कर्तृकानुवादकनियोजन, निवेदकाह्वान, प्रायश्चित्तार्थि-कर्तृकपुस्तकपूजन, अनुवादक-पूजन, अनुवादककर्तृक-प्रायश्चित्तोपदेश, प्रायश्चित्तार्थिकर्तृक-प्रायश्चित्तोपदेशस्वीकार, प्रणाम, वपन, नखनिकर्तन, दन्तधावन, दशस्नान (भस्म-गोमय-मृत्तिका-जल-गोमूत्र-गोमय-गोदुग्ध-गोदधि-गोघृत- कुशोदकस्नान), गङ्गाजलस्नान, मार्जन, वस्त्रपरिधान, तर्पण, विष्णुश्राद्ध, गोदान, अग्निस्थापन, ब्रह्मकूर्चहवन, तारकोदयोत्तर ब्रह्मकूर्चप्राशन, चतुर्वेदसूक्तपारायणश्रवण; २०४८।८।१४ मितिमा शास्त्रसम्मत त्रिपुराणक १८० प्रायश्चित्त-गोदानहरु, दशमांश-दक्षिणा, प्रायश्चित्तोत्तराङ्ग-होम, विष्णु-श्राद्ध, गोदान, मापकमितहिरण्यदान, भूयसीदान, दशसङ्ख्याकब्राह्मणभोजनदान, ब्राह्मणचरणोदकले धारणा र पुनरुपनयन गरिएको थियो। यो कर्म सम्पन्न गर्न सत्प्रेरणा दिनि बन्धुबान्धव प्रति कृतज्ञता २०४८।८।२५।४ मिति का गोर्खापत्त्रमा प्रकाशित गरिएको थियो।

ब्राह्मणोपवेशनका लागि तललेखिए अन्सार्को निमन्त्रणापत्त्र दिय्येको थियो --

"यथालाभ विद्द्वान् सदाचारि ब्राह्मणहरुको उपवेशन गराइ पर्षदुपस्थानको रित समेत गराएर वाँहाँहरुबाट काशिका प्रतिष्ठित विद्द्वान् ब्राह्मणहरुले दिनुभएको प्रायश्चित्तव्यवस्थाको सारांशको उपदेश सुनाइ मेरा भाइ सोमराजआचार्यलाइ प्रायश्चित्त गराउने कार्यक्रम भएकाले सो ब्राह्मणोपवेशनमा समाविष्ट भै उक्त प्रकारले प्रायश्चित्तोपदेश गरिदिने अनुग्रह गर्न २०४८।८।१३ मितिमा दिनको ११.३० बजे मेरा भाइ सोमराजआचार्यको लाजिम्पाटस्थित घरमा पाल्नुहुन प्रार्थना गर्दछु।"

ब्राह्मणोपवेशनमा श्रीसोमनाथपौडेल (वेदाचार्य), श्रीभीमकान्तपन्थि (साहित्य-शास्त्रि), श्रीनारायणप्रसादलामिछाने (ज्योतिषशास्त्रि, अग्निहोत्त्रि), श्रीविष्णुप्रसाद ग्यँमालि (इतिहासपुराणाचार्य), श्रीदैवदत्त कोइराला (वेदाचार्य), श्रीवाल्मीकि पौडेल (वेदाचार्य), श्रीईश्वरप्रसादपण्डित(इतिहासपुराणाचार्य), श्रीदेवराजपौडेल (साहित्याचार्य, विद्द्यावारिधि) श्रीकाशिराज सुवेदि (दर्शनाचार्य, विद्द्यावारिधि) बस्नुभएको थियो। प्रायश्चित्तोपदेश गर्नि अनुवादक श्रीशुकदेवपौडेल (व्याकरणाचार्य) हुनुहुन्थ्यो।

लगायत देशदेशका शास्त्री विद्वान् पण्डितहरुले लेखी पठाएका व्यवस्थापत्रमा पनी विवाह गर्न हुने लेखी आएको भै हाम्रा भैभारदार गुरु प्रोहित पण्डित शास्त्रीहरु जम्मा गराइ शास्त्रको छलफल गराइ विचार भएमा लेखिएका पञ्चमपञ्चममा विवाह गर्न हुने ठहराई सबैले सहिछाप गरी सम्मति दिएको हुनाले" भन्नि उल्लेख समेत पाय्येकाले नेपालमा धर्मशास्त्रीय गम्भीर विषयमा काशिका विद्वान्हरुसित पनि व्यवस्था माग्नि चलन अगिदेखि नै रैआएको देखिन्छ।

सामान्यतया शिखासूत्र-स्नानसन्ध्योपासन-भक्ष्याभक्ष्यादिका परम्परागत शास्त्र-सम्मत शुद्धकुलीनब्राह्मणाचारमा रै आएका कतिपय बन्धुहरुलाइ पनि उक्त अवसरमा निम्त्याय्येको थियो । निम्तिनिहरुमा रेवती देवी, लक्ष्मी देवी, कालिका देवी, योगमाया देवी, शिवशङ्कर आचार्य, तीर्थराज आचार्य, रमानाथ आचार्य, विजयराज आचार्य, रामचन्द्र पौडेल, ज्ञानहरि पण्डित, नारायणदत्तशास्त्रि, हरिहर ढकाल, शारदाप्रसाद घिमिरे हुनुहुन्थ्यो । व्राँहाँहरुलाइ दिय्येको निमन्त्रणापत्र तल लेखिए अनुसारको थियो --

"भारतवर्षबहिर्गमनादि-दुरितको निरसनका लागि काशिका प्रतिष्ठित विद्द्वान् ब्राह्मणहरुले दिनुभएको प्रयश्चित्तव्यवस्थाको सारांशको उपदेश यथालाभ विद्द्वान् सदाचारि ब्राह्मणहरुको उपवेशन गराइ पर्षदुपस्थानको रित समेत गराएर व्राँहाँहरुबाट सुनाइ हाँम्रा भाइ सोमराज आचार्यलाइ यथाशक्ति यथाविधि शास्त्रोक्त प्रायश्चित्त गराउने कार्य २०४८।८।१३ मितिमा दिनको ११.३० बजे सोमराज आचार्यको लाजिम्पाटस्थित घरमा प्रारम्भ हुने भएकाले सो अवसरमा उपस्थित मै वेदस्मृति-पुराणादिप्रतिपादित र वेदादिविज्ञशिष्टहरुबाट निर्णीत तथा आचारित हुँदै आएको वैदिक-सनातन-ब्राह्मणधर्मको तद्विरुद्ध विचार र आचरण त्यागेर यथाशक्ति अनुसरण गर्ने काममा हृदयदेखि नै सहयोग पुऱ्याउनु हुन सादर अनुरोध गर्दछु ।"

भरतपुर-अस्पताल-(चितउन-)मा कार्यरत भाइ डा. विजयराज आचार्यलाइ पत्नीपुत्रसहित उक्त कार्यक्रममा उपस्थित हुन आउन पत्र पठाय्येको थियो ।

प्रायश्चित्तगोदान-ग्रहण गर्न ब्राह्मणहरुलाइ तललेखिएअनुसार्को निमन्त्रणापत्र दिय्येको थियो —

"काशिका प्रतिष्ठित विद्द्वान् ब्राह्मणरुले अनुग्रह गरि दिनुभएको व्यवस्थानुसार् गर्नलागिएको भारतवर्षबहिर्गमन-विदेशि-विधर्मि-विजातीय-सहभभोजन-जातिदुष्टाभक्ष्यभोजनादिप्रायश्चित्तस्थानापन्नषडब्दकृच्छ्रप्रत्याम्नायगोनिष्क्रयद्रव्यदानरूप गोदान ग्रहणगर्न २०४८।८।१४ मितिमा दिनको १० बजे मेरा भाइ सोमराजआचार्यको लाजिम्पाटस्थित घरमा पाल्नुहुन प्रार्थना गर्दछु ।"

२०४८।८।१४ मितिमा प्रायश्चित्तकर्मस्थलमा उपस्थित मै गोनिष्क्रयद्रव्यग्रहण गर्निहरुमा— श्रीवाल्मीकिपौडेल, श्रीशेखरप्रसादपण्डित, श्रीशुकदेवपौडेल, श्रीदैवदत्त-कोइराला, श्रीविष्णुप्रसादग्यैँमालि, श्रीभीमकान्तपन्थि, श्रीमधुसूदनदुङ्गाना, श्रीदुर्गाप्रसाद-खनाल, श्रीशशिरामखनाल, श्रीहरिनाथखनाल, श्रीशिवप्रसादपौडेल, श्रीदुर्गाराम रेग्मि, श्रीवासुदेवखनाल (सितापाइला), श्रीदुर्गाप्रसादढुङ्गाना (लम्जुङ), श्रीलक्ष्मीरामखनाल, श्रीवासुदेवखनाल(चण्डोल), श्रीनारायणप्रसाद लामिछाने (अग्निहोत्रि) हुनुहुन्थ्यो ।

सङ्कल्पित-गोनिष्क्रयद्रव्यदान गर्दा पछि पनि प्रायश्चित्तगोदानग्रहण गर्न दिय्येको उपर्युक्त प्रकारको निम्तापत्र दिइ अनुमति प्राप्त भएपछि द्रव्य अर्पित गरिएको थियो । सङ्कल्पित गोनिष्क्रयद्रव्य पछि ग्रहणगर्निहरुमा श्रीश्यामलाल घिमिरे, श्रीदीर्घराज घिमिरे, श्रीदेवराज पौडेल, श्रीपुरुषोत्तम ढुङ्गाना, श्रीसीताराम ढकाल, श्रीभैरवखनाल (उपल्लाचुँदि), श्रीप्रयागखनाल(उपल्लाचुँदि), श्रीरामप्रसादपण्डित(उपल्लाचुँदि) श्रीदिवाकर भटराइ (म्याग्दे), श्रीरामदत्तभटराइ (म्याग्दे), श्रीवासुदेवकाफ्ले (म्याग्दे), श्रीहरिहर







पारिषद्यान् ब्राह्मणान् दण्डवत् प्रणमन् प्रायश्चित्तार्थी दुरितंनिवेदनङ् कुर्वाणश्च

